२०८१, जेठ

मूल्य रू. २५

# युवामञ्च

https://gorkhapatraonline.com/yuba-manch



## सम्भव छ विगत हेर्न

सूर्य उदाएको वा अस्ताएको तस्बिर खिच्दा त्यो दृश्य झन्डै साढे आठ मिनेट अगाडिको हुन्छ । तस्बिर हेर्दासम्म सूर्य साढे आठ मिनेट पहिलै अस्ताइसकेको हुन्छ ।

---

## सातुको शक्ति

# सङ्गीतको भूगोल

## ट्रोयलाई हराउने ट्रोजन हर्स

## गोरखापत्र संस्थानका प्रकाशनमा विज्ञापन प्रकाशन तथा ग्राहक बन्नुपरेमा निम्नानुसारका कार्यालयमा सम्पर्क गर्नुहुन सम्बन्धित सबैमा अनुरोध गरिन्छ ।

**प्रधान कार्यालय,** धर्मपथ, काठमाडौं
सम्पर्क नं. : ०१-५३२७४९३ (विज्ञापन शाखा)/ ५३२०६३८ (ग्राहक सेवा शाखा)/टोल फ्री नं. १६६००१९४४४४
इ-मेल : mgorkhapatra@gmail.com

**पूर्व क्षेत्र प्रकाशन कार्यालय,** विराटनगर
विराटनगर-१९, मोरङ, कोशी प्रदेश
सम्पर्क नं. : ९८५११२९६७६
इ-मेल : biratnagar.regional@gorkhapatra.org.np

**पश्चिम क्षेत्र प्रकाशन कार्यालय,** कोहलपुर
सम्पर्क नं. : ०८१-५३१६२३, ९८६१८८८५६४
इ-मेल : kohalpur.regional@gorkhapatra.org.np

**मधेश प्रदेश कार्यालय,** जनकपुरधाम, धनुषा
सम्पर्क नं. : ०४१-५९०४२९, ९८५१००९७९३
इ-मेल : janakpur.regional@gorkhapatra.org.np

**बागमती प्रदेश कार्यालय,** हेटौंडा, मकवानपुर
सम्पर्क नं. : ०५७-५९०६५१
इ-मेल : hetauda.regional@gorkhapatra.org.np

**गण्डकी प्रदेश कार्यालय,** पोखरा, कास्की
सम्पर्क नं. : ०६१-५३१८२७, ९८६५०२२६६६
इ-मेल : pokhara.regional@gorkhapatra.org.np

**लुम्बिनी प्रदेश कार्यालय,** बुटवल, रुपन्देही
सम्पर्क नं. : ०७१-५४३३७६, ९८४९६४५३०६
इ-मेल : butwal.regional@gorkhapatra.org.np

**कर्णाली प्रदेश कार्यालय,** वीरेन्द्रनगर, सुर्खेत
सम्पर्क नं. : ०८३-५९००६०, ९८४९०३४२३१
इ-मेल : karnali.regional@gorkhapatra.org.np

**सुदूरपश्चिम प्रदेश कार्यालय,** धनगढी, कैलाली
सम्पर्क नं. : ०९१-४१२०४३, ९८५८४२१८०१
इ-मेल : dhangadi.regional@gorkhapatra.org.np

### हाम्रा प्रकाशनहरू

गोरखापत्र
THE RISING NEPAL
gorkhapatraonline.com
मधुपर्क
युवामञ्च



मुद्रक : गोरखापत्र संस्थान, धर्मपथ, काठमाडौं।

वर्ष ३६, अङ्क १२, २०८१ साल जेठ

May-June 2024

Twitter: @YuvamanchGps | yubamanchmonthly

# यस भित्र











## ४० ट्रोयलाई हराउने ट्रोजन हर्स

## ३१ सङ्गीतको भूगोल

सङ्गीतको झङ्कार, गीतका भाका र शब्दमा भूगोल प्रतिविम्बित भइरहेका हुन्छन्, जसले सङ्गीत र भूगोलबीच विद्यमान घनिष्ट साइनोको साक्षी बकिरहेको हुन्छ ।

## ५० सातुको शक्ति

परम्परागत रुपमा सातुलाई महीसँग खाने गरिन्थ्यो भने पछिल्लो समय तातो या चिसो पानी, तातो या चिसो दूधसँग मात्र नभई विभिन्न फलफूलको रस या दहीसँग समेत खान थालिएको छ ।

## ६७ खाना र क्यान्सरबीचको सम्बन्ध

मोटोपनासँगै नसर्ने रोग लाग्ने क्रममा क्यान्सर हुन सक्ने जोखिम पनि बढ्छ ।

## ५७ चुनावमय भारत


**युवामञ्चमा लेखरचना तथा चिठीपत्र पठाउँदा निम्न ठेगानामा पठाउनु होला-**

yubmanch@gmail.com

सम्पर्क- सम्पादकीय- ५३५७०३१

गोरखापत्र संस्थान, धर्मपथ, काठमाडौं, पो.ब.नं. २३



**अनलाइनमा युवामञ्च**

https://gorkhapatraonline.com/yuba-manch

http://www.gorkhapatraonline.com/epaper

# युवामञ्च

**कार्यकारी अध्यक्ष**
**विष्णुप्रसाद सुवेदी तथा महाप्रबन्धक**
**लालबहादुर ऐरीद्वारा**
गोरखापत्र संस्थानका लागि
संस्थानको छापाखानामा मुद्रित
तथा प्रकाशित

सम्पादक
उमेशकुमार ओझा

नायब कार्यकारी सम्पादक
भवानी सुवेदी

सह–सम्पादक
शरदराज सुवेदी

वितरण विभाग
तारा बस्याल

उत्पादन विभाग
ओम भुसाल

शुद्धाशुद्धि
बोमबहादुर रायमाझी

लेआउट तथा डिजाइन
रोशनप्रकाश दनुवार

**गोरखापत्र संस्थान**
पो.ब.नं. २३, धर्मपथ, काठमाडौँ, नेपाल।
इमेल : yubmanch@gmail.com
फोन – सम्पादकीय : ५३५७९३१
विज्ञापन : ५३२७४९३, वितरण : ५३२०६३८,
पूर्व क्षेत्र प्रदेश स्तरीय प्रकाशन कार्यालय,
विराटनगर : ०२१–४७१७४६
पश्चिम क्षेत्र प्रदेश स्तरीय प्रकाशन कार्यालय,
कोहलपुर : ०८१–५३१६२२/२३
प्रदेश स्तरीय कार्यालयहरू,
जनकपुर : ०४१–५९०४२९
हेटौँडा : ०५७–५९०६५१
पोखरा : ०६१–५३८५२२
बुटवल : ०७१–५४१४३८
सुर्खेत : ०८३–५९००६०
धनगढी : ०९१–४१२०४३

एकप्रतिको मूल्य रु.२५/–
वार्षिक मूल्य रु.२५०/–


*सम्पादकीय*

# आशावादी बनौँ

समाजमा एउटा कथन छ, चिन्ता चिता समान। कुनै विषयमा गहन चिन्तन गर्नु वा कुनै घटनाले एकछिन चिन्तित हुनुलाई हरेक मानिसको सामान्य स्वभाव मान्न सकिन्छ तर परिआएका वा अनाहकका विषय/प्रसङ्गमा जतिबेला पनि एकोहोरो मगज खियाएर बस्नु पक्कै पनि राम्रो होइन। ससाना कुरामा पनि बढी चिन्तित हुने, असफलतालाई आफ्नो कमजोरी मात्र ठान्ने, हरेक कुरामा कमजोर मन राख्ने र सम्भावना/भविष्यप्रति आशावादी हुन नसक्ने मानिस चिन्ताले घेरिएर बस्छ। चिन्ताले उसको कार्यक्षमता, एकाग्रता र सम्बन्धमा समस्या आउँछ तथा मनोवेग अस्थिर बन्छ र दिमागमा एक खालको अवसादले डेरा जमाउन थाल्छ। जसलाई चलनचल्तीको चिकित्सा भाषामा डिप्रेसन भनिन्छ। समयमा निराकरण र व्यवस्थापन भएन भने डिप्रेसनले पुर्‍याउने अन्तिम बिन्दु हुन सक्छ आत्महत्या। यसैले भनिएको हो चिन्ता चिता समान।

यस प्रसङ्गमा समकालीन नेपाली युवाले गम्भीर भएर विचार गर्नु जरूरी छ। सफलता/असफलता, अवसर, सम्बन्ध व्यक्तिको आफ्नो क्षमता, व्यवहार र सकारात्मक भावनाले निर्देशित रहन्छन्। आफ्नो क्षमता अभिवृद्धिमा नलाग्ने, प्रतिस्पर्धी हुन नसक्ने, भाग्यलाई सराप्ने, भावनामा डुब्ने, कुलतमा लाग्ने, साथीभाइको भावना बुझ्न नचाहने र उनीहरूको क्षमतालाई सम्मान गर्न नसक्ने, अनि डाहा, ईर्ष्यामा लिप्त भएमा मनोवेग अस्थिर हुन्छ र चिन्तित भइन्छ। यी अवस्थाले मानिसलाई डिप्रेसनतिर लैजान्छ। यसका अन्तिम रूप अनावश्यक दुःखी हुने र चिन्तित रहने, चिढचिढे, आनन्द र उत्साहको कमी, एकाग्रता गुम्ने, आत्मग्लानि, अस्थिरता आदिले घेरिनुपूर्व नै युवाले आशावादी हुने, सम्बन्ध विस्तार र सकारात्मक मनोविज्ञानको मार्गमा अग्रसर हुनु जरूरी छ।

युवा जमातले देशको कायाकल्प गराउनुपर्नेमा उनीहरू नै मानसिक रूपमा अस्वस्थ हुनु वा डिप्रेसनमा पर्नु राम्रो सङ्केत होइन। यो समस्या निश्चय नै सर्वपक्षीय पहलको विषय हो। डिप्रेसन एक व्यक्तिमा सीमित रहने भए पनि यसमा अनेक पक्ष उत्तरदायी हुन्छन्। सबैको पहलबाट मात्र मानसिक रोगको सफल उपचार हुन सक्छ। कसैले पनि डिप्रेसनलाई सानो रोग सम्झेर बेवास्ता गर्नु हुँदैन। यसले मानिसको मन मस्तिष्कलाई असर गर्छ नै, साथै शरीरका सम्पूर्ण भागमा कुप्रभाव पारेर मुटु रोगी पनि बनाउन सक्छ।

चिकित्सा विज्ञानले डिप्रेसनका धेरै कारण पत्ता लगाएको छ तर कुन कारणले मानिसमा उदासीनता बढ्छ भन्न सकिन्न। आनुवंशिक, मनोगत, सामाजिक, पारिवारिक, भावनात्मक, असफलता आदिलाई दोषी मान्न सकिएला तर जे जस्ता कारण भए पनि डिप्रेसनको सम्बन्ध मूलभूत रूपमा व्यक्तिको मनोविज्ञानसँग जोडिएको छ। उसले कुनै घटनालाई कसरी बुझ्छ र व्यवहार देखाउँछ त्यसबाट उसको मनोवस्था विकास हुन्छ। कुनै अप्रिय घटनामा जति धेरै समय असहजता महसुस गर्‍यो त्यति मानसिक अवस्था सन्तुलनमा रहन्न, चिन्ताले गाँज्छ र डिप्रेसन सुरू हुन सक्छ। मानिसले आफू चिन्तित भएको महसुस गर्न सक्छ तर डिप्रेसनमा गएको चाल पाउँदैन, यसैले डिप्रेसन गम्भीर छ। चिन्ताले डिप्रेसनको रूप त लिएन, डिप्रेसन कतै झाँगिन त खोजिरहेको छैन ? यसैले चिन्ता छोडौँ, सकारात्मक र आशावादी भएर जिऔँ। ■

## मन फुरुङ्ग

युवामञ्चको २०८१ साल वैशाखको अङ्क समयमै पढ्ने अवसर मिल्यो। यस अङ्कमा प्रकाशित प्रायःजसो लेख रचना पठनीय नै छन्। त्यसमा पनि पोलियो पल शीर्षकको लेख ज्यादै रोचक लाग्यो।

युवामञ्चको प्रत्येक अङ्क खोजी खोजी पढ्ने गरेको छु। मान्छे नै चिम्पाञ्जी बन्यो शीर्षकको लेख पठनीय छ। रतन भण्डारीले लेखेको महान् गणितज्ञ रामानुजनका बारेमा जान्ने अवसर मिल्यो। यमबहादुर दुराले लेखेको जीवनधारा पानी पँधेरा शीर्षकको लेख निकै रोचक लाग्यो। आस्था श्रेष्ठले हामीलाई काम लाग्ने ज्ञानवर्द्धक कुरा लेखेको पढ्न पाइयो। वरिष्ठ पत्रकार हरिहर विरहीका बारेमा पढ्ने मौका मिल्यो। काजुको जङ्गल शीर्षकको सामग्री पढ्न पाउँदा मेरो मन खुसी भयो। युवामञ्च ठाउँ ठाउँमा पुग्न सकोस्। युवामञ्चमा साहित्यिक रचनाले पनि स्थान पाउन सकोस्।

**– अरुणबहादुर खत्री 'नदी'**
**बूढानीलकण्ठ–४, पासीकोट, काठमाडौँ**




## उत्तर मिलेन

युवामञ्च युवाको प्रिय पत्रिका हो। २०८० साल वैशाखको युवामञ्च समयमै पढ्ने अवसर मिल्यो। समसामयिक विषयवस्तुमा पाठकको विचार समेटेर स्तम्भ राख्दा पाठक सहभागिता बढ्न सक्थ्यो।

साथै २०८० साल फागुनको सामान्य ज्ञान स्तम्भको वैशाखमा प्रकाशित उत्तरमा समूह (ख) को १ र २ को उत्तर प्रश्न अनुसार मिलेको देखिँदैन।

**उमेश थापा**
**जानकी ८, भोक्सी, कैलाली**

## युवामञ्चले लोभ्यायो

वैशाखको युवामञ्च मैले बेलैमा पढ्ने अवसर पाएँ। वास्तवमा हामी युवाको लोकप्रिय पत्रिका बन्दै गएकोमा यो पत्रिकाको पूरै टिमप्रति म आभार प्रकट नगरी रहन सकिनँ। यो पत्रिकामा छापिने सामग्रीको विविधताले मलाई लोभ्याएको हो।

युवामञ्चले यसैगरी सबैको मन जित्दै जाओस् शुभकामना दिन चाहन्छु। युवामैत्री बन्ने प्रयासमा यो पत्रिका निरन्तर लागिरहोस्। यौनका बारेमा युवाको जहिले पनि जिज्ञासा रहने गर्दछ। यो विषयले प्राथमिकता पाए सुनमा सुगन्ध हुने थियो। युवामञ्च सधैँ अब्बल पत्रिका बनिरहोस्। सामग्रीको विविधतामा कुनै कन्जुस्याइँ कहिले नहोस्।

**जानकी शाह**
**राजविराज**

# रोचक सामग्रीले भरियोस्

युवालाई मन पर्ने पत्रिका किन भयो युवामञ्च भन्ने कारण खोज्न केही बेर एकान्तमा घोत्लिएँ र सोचेँ । किन म जस्ता पाठकका लागि युवामञ्च महत्त्वपूर्ण छ भनेर । त्यसपछि मसँग एउटै जवाफ आयो वास्तवमा यो पत्रिकाले सधैँ रोचक विषयको जानकारी दिन्छ र पठनीय सामग्री छाप्छ त्यही भएर नै मलगायत पाठक यो पत्रिका पढ्न मरिहत्ते गर्छन् ।

वैशाखको युवामञ्च मेरो हातैमा छ । यो पत्रिकामा फोक्सोमा रुख भएको अति नै रोचक सामग्री प्रकाशित रहेछ । यस्तै सर्वाधिक मोटे मिनेखको बारेमा पनि जान्न पाइयो । हाम्रा पुर्खाले तामाका भाँडा किन प्रयोग गर्दथे भन्ने ज्ञानगुनका कुरा पनि जान्न पाइयो । सायद यी र यस्तै कारणले गर्दा नै होला कि युवामाझ यो पत्रिका चर्चित बन्दै गएको । यस्ता रोचक र पठनीय सामग्री सधैँ यसैगरी पढ्न पाउने आशाका साथ शुभकामना ।

**दिनेश पोखरेल**
**बलाह, सुनसरी**



फोक्सोमा रुख

सर्वाधिक मोटे मिनेख

# रामानुजनका बारेमा जानियो

युवामञ्चमा धेरै नै नयाँ र रोचक विषयका बारेमा जानकारी पाइने भएकाले नै म यो पत्रिका पढ्दै आएको छु । वैशाखको अङ्कमा पनि त्यस्तै रोचक सामग्री पढ्न पाइयो । महान् गणितज्ञ रामानुजनका बारेमा जे जति जान्न पाइयो वास्तवमा उनका बारेमा योभन्दा पहिले सामान्य जानकारी पनि थिएन ।

असाधारण प्रतिभाका धनी उनी धेरै मेहनती रहेछन् । उनीबाट हामीले सिक्ने धेरै कुरा छन् । प्रेरणा स्रोतका बारेमा पढ्न पाएर हामी धेरै नै प्रसन्न भएका छौँ । यस्तै डिजिटल बैङ्क र डिजिटल करेन्सी के हो भन्ने बारेमा पनि युवामञ्चले यथेष्ट जानकारी गराउने काम गरेकाले म धन्यवाद ज्ञापन गर्दछु । यस्तै सामग्री भविष्यमा पनि पढ्न पाउँ है ।

**मदन पण्डित**
**मकवानपुर–३**

# भ्रष्टाचारबारेमा छाप्नु पर्‍यो

युवामञ्चले सबै विषयलाई प्राथमिकतामा राख्ने गरेको भए पनि एउटा विषयमा यो पत्रिका किन मौन छ ? मुलुक भ्रष्टाचारमा चुर्लुम्मै डुबेको छ तर यो बेलामा पनि किन खोजी न्युज प्रकाशित गर्न कन्जुस्याइँ ? पाठकको चाहना अनुसारका सामग्री प्रकाशित गर्ने युवामञ्चलेयो बारेका लेख प्रकाशित गरोस् भनेर अनुरोध गर्दछु ।

**सुरेश अधिकारी**
**कास्की–२**

डबली

# जहरिलो ग्यास
# कार्बनमोनोअक्साइड

■ त्रिचन्द्र प्रतीक्षा



कार्बनमोनोअक्साइड एक प्रकारको ग्यास हो। यसको कुनै गन्ध हुँदैन। रङरहित, गन्धरहित र स्वादरहित यो ग्यासले हामीलाई एक्कासि मृत्युको मुखमा पुऱ्याउन सक्छ। विशेषगरी कार्बनमोनोअक्साइड ग्यास घर न्यानो बनाउन झ्यालढोका बन्द गरेर आगो बाल्दा निस्कन्छ।

लन्डन हाजर्ड सेन्टर ट्रस्टको रिपोर्ट अनुसार काम गर्ने ठाउँ र घरलाई विषाक्त गर्नेमा एस्बेस्टसपछि कार्बनमोनोअक्साइड दोस्रो स्थानमा पर्छ।

सवारीसाधन जस्तै मोटरकार, ट्रकमा इन्धन जल्दा, ग्यासबाट चल्ने मोटर, साना इन्जिन चल्दा, ग्यास चुलो, दाउरा तथा कोइला राम्ररी नबल्दा यो ग्यास निस्कन्छ। घर न्यानो बनाउन प्रयोग गरिने ग्यास हिटर, मकल, जाडोमा पानी तताउन प्रयोग गरिने गिजर आदिबाट पनि कार्बनमानोअक्साइड ग्यास बन्छ।

साँघुरो वा बन्द वा थोरै मात्रामा हावा प्रवाह हुने ठाउँमा यो ग्यास जम्मा हुन्छ। अनि यस्ता ठाउँमा बस्ने मानिस र जनावरले सास फेर्दा यो शरीरभित्र प्रवेश गर्छ र स्वास्थ्यमा गम्भीर प्रभाव पर्छ।








कार्बनमोनोअक्साइड ग्यासले शरीरमा प्रभाव पार्दा देखिने लक्षणहरू भनेको रिँगटा लाग्ने, टाउको दुख्ने, कमजोरी महसुस हुने, वाकवाक लाग्ने, कसै–कसैलाई छातीसमेत दुख्ने हुन्छ। बढी मात्रामा कार्बनमोनोअक्साइड शरीरमा जानाले बेहोस हुने र प्रभावितको मृत्युसमेत हुने गर्छ।

हामीले सास फेर्दा अक्सिजन ग्यास फोक्सोबाट रगतले लिएर शरीरको विभिन्न अङ्गमा पुऱ्याउँछ। जब हामी कार्बनमोनोअक्साइड भएको ठाउँमा बस्छौँ रगतले अक्सिजनको भन्दा चाँडो कार्बनमोनोअक्साइडलाई टिप्छ र लैजान्छ। रातो रक्त कोषिकाले अक्सिजनभन्दा कार्बनमोनोअक्साइडलाई सजिलै सोस्ने हुँदा रगत विषाक्त हुन्छ। यसले अक्सिजनलाई पूरै विस्थापित गर्छ। शरीरमा अक्सिजनको मात्रा कम हुँदै गएपछि कार्बनमोनोअक्साइडले शरीरमा बिगार गर्न थाल्छ।

यसकारण घरमा पेट्रोलियम पदार्थ वा कोइलाले घर वा पानी तपाउने गरेको भए यस्ता उपकरण राम्ररी र सुरक्षित रूपमा जडान गर्नुपर्छ। कोठामा हावाको प्रवाह राम्रो राख्नु जरुरी हुन्छ।

हिटर, चुलो बाल्दा आगोको ज्वाला निलो नभई पहेँलो छ भने केही गडबडी छ र त्यसबाट कार्बनमोनोअक्साइड निस्कन सक्छ भनेर सतर्क भइहाल्नु पर्छ। झ्याल वा ढोका खुला राखेर मात्र आगो बाल्ने वा कोठा तताउनु बुद्धिमानी हुन्छ। ■



संयुक्त अधिराज्य बेलायतको आधिकारिक नाम 'युनाइटेड किङडम अफ ग्रेट ब्रिटेन एन्ड नर्दन आयरल्यान्ड' (United Kingdom of Great Britain and Northern Ireland) हो। यसलाई देशको सर्वाधिक अक्षर भएको नाम मानिएको छ।

तर सधैँ यस्तो चाहिँ थिएन। कुनै बेला लिबियाको नाममा सर्वाधिक ६३ अक्षर थिए। त्यतिबेला त्यसलाई अल जुमरियाह अल अरबियाह अल लिबियाह एस सबियाह अल इस्तरिकियाह अल उज्मा (Al Jumahiriyah al Arabiyah al Libiyah ash Shabiyah al Ishtirakiyah al Uzma.) भनिन्थ्यो। सन् २०१३ मा यसको आधिकारिक नाम परिवर्तन गरेर लिबिया राखियो। ■

*–युवामञ्च*

उबली

# आँखाले जोगिएको कार्ल



सन् १९०४ मा स्विडेनका नाबिक कार्ल पिटर्सनको पानीजहाज पपुआ न्युगिनीको एउटा टापुको तटमा दुर्घटना भयो। उनी जसोतसो त्यस टापुमा पुगे। त्यस टापुमा त्यतिबेला नरभक्षण गर्ने मानिसको बसोबास रहेको थियो। कबिलाका मानिसले बेहोस पिटर्सनलाई लिएर आफ्नो राजाकहाँ लगे। त्यहाँकी राजकुमारी पिटर्सनलाई देखेर मोहित भइन् र उनलाई प्रेम गर्न थालिन्।

दुर्घटनाग्रस्त पानीजहाजसहित पिटर्सन नरभक्षी मानव बस्ने टापुमा पुगे। सुरुमा त उनीहरूले पिटर्सनलाई मारेर खाने तयारी गरे तर बेहोस भएका पिटर्सनलाई जब होस आयो र उनले आँखा खोले नरभक्षी मानिसहरू उनको आँखाको रङ देखेर चकित परे छन्। ती नरभक्षीले नीलो आँखा पहिले कहिल्यै देखेका थिएनन्। आँखाको रङले नै पिटर्सनको ज्यान बचायो।

विगतमा आफूहरूले जे जस्तो गरेका थिए त्यसको विपरीत ती नरभक्षीले पिटर्सनलाई नमारेर राजाकहाँ लिएर गए। आँखा त नीलो छँदै थिए चतुर पिटर्सनले त्यस टापुका राजा र मानिसमा आफ्नो प्रभाव जमाउन धेरै समय लगाएनन्। त्यहाँकी राजकुमारी उनलाई प्रेम गर्न थालिन्। साथै पिटर्सनले नरिबल र सुनको व्यापार समेत गरे। स्थानीयमाझ लोकप्रिय भएका पिटर्सनसँग राजाले आफ्नो छोरीको विवाहसमेत गरिदिए। पछि राजाको शेषपछि पिटर्सन त्यस टापुको राजा भएका थिए। ■

*–युवामञ्च*

# रक्तस्राव गराउने प्राचीन विधि

प्राचीनकालका विभिन्न सभ्यतामा चिकित्सा उपचारको एक माध्यमका रूपमा शरीरबाट जानाजान रक्तस्राव गराउने विधि (ब्लडलेटिङ) अभ्यासमा थियो। प्राचीन इजिप्ट र ग्रीसमा यो विधि निकै प्रचलनमा रहेको तथ्य भेटिन्छ।

मध्ययुगमा व्यापकता तथा सम्मानका दृष्टिबाट यो विधि लोकप्रियताको शिखरमा पुगेको थियो। के विश्वास गरिन्छ भने शरीरका चार घटक रक्त, कफ, कालो पित्त र पहेँलो पित्तमा उत्पन्न हुने असन्तुलन नै विभिन्न रोगको कारण हुन्छ। प्राचीनकालमा शरीरको सन्तुलन पुनर्स्थापित गर्नु रक्तस्रावको उद्देश्य हुन्थ्यो।

प्रख्यात ऐतिहासिक व्यक्तित्व अमेरिकाका प्रथम राष्ट्रपति जर्ज वासिङ्टन र इङ्ग्ल्यान्डका राजा चार्ल्स द्वितीयले समेत स्वास्थ्यलाभ प्राप्त गर्न रक्तस्राव गराएका थिए। यस विधिले उपचार गर्दा प्रायः दुर्भाग्यले लाभभन्दा बढी हानि नै हुन्थ्यो। कतिसम्म अनुमान गरिएको छ भने यसै उपचार अभ्यासका कारणले गर्दा वासिङ्टनको छिटै मृत्यु भयो।



शताब्दीयौँ पहिले रोगको उपचार गर्न चिकित्सकले रोगीको शरीरमा जानाजान रक्तस्राव गराउँथे। रोगीको शरीरबाट रक्तस्राव गराउँदा कैयौँ खालका रोगव्याधि निको हुने उनीहरूको विश्वास थियो। प्राचीन कालदेखि मध्य युगसम्म र त्यसपछिका दिनमा समेत जानाजान रक्तस्राव गराउने विधिलाई विश्वासका साथ अँगालियो, भलै त्यसबाट

विश्वमा रहेका प्राचीन पिरामिडका बारेमा जब हामी कुरा गर्छौं सबैको मानसपटलमा इजिप्ट अर्थात् मिश्रको नाम आउन सक्छ। किनभने त्यहाँको विशाल पिरामिडमध्ये गिजाको पिरामिड सुपरिचित जो छ।

पिरामिडसँग इजिप्टको गहिरो नाता र पहिचान जोडिएको किन नहोस् सर्वाधिक पिरामिड भएको देशचाहिँ इजिप्ट होइन। सुडानमा यी प्राचीन स्मारकको सङ्ख्या इजिप्टको भन्दा करिब दोब्बर । सुडानमा जानकारीमा आएका पिरामिडको सङ्ख्या दुई सयदेखि दुई सय ५० सम्म छ। जो नुबियाका कुस्ते अधिराज्यका लागि बनाइएका थिए। जबकि इजिप्टमा एक सय ३८ पिरामिड मात्र छन्। ■

*-युवामञ्च*





ह्वेल माछाले पानीको सतह नजिक आएर आफ्नो दिनको सात प्रतिशत समय ठाडो अवस्थामा सुतेर बिताउँछ। एक पटकमा ह्वेलले १० देखि १५ मिनेट मात्र सुत्छ। ■

*-युवामञ्च*

गम्भीर परिणाम बेहोर्नु परेको किन नहोस्।

चिकित्सा विज्ञानले फ्लेबोटामी भन्ने गरेको जानाजान रक्तस्राव गर्ने विधिको जरा प्राचीन इजिप्टवासीदेखि रोमन कालसम्म देखिन्छ। प्राचीन चिकित्सकले जानाजान रक्तस्राव गराउन विभिन्न विधि अपनाउथे। जुकाले टोकाउने, चिर्ने आदि विधि रक्तस्रावका लागि अपनाइन्थ्यो। शरीरको सन्तुलन बनाउनका लागि उनीहरू यसो गर्दथे।

मध्य युगमा त यस विधिलाई प्रभावकारी र आदरभावले हेरियो। मठमन्दिर र चिकित्सा विद्यालयमा यसबारेमा औपचारिक शिक्षा र तालिमको व्यवस्थासमेत गरिन थालियो। ज्वरो आएकोदेखि टाउको दुखेको तथा अन्य खालका शारीरिक विकारमा जानाजान रक्तस्राव गराउने विधिले मध्य युगमा व्यापकता पाएको थियो।

रक्तस्राव गराउने विधिमा विश्वास भए पनि यसको नतिजा प्रायः गम्भीर हुन्थ्यो। धेरै नै रक्तस्राव भएका रोगीलाई कमजोरी हुने, सङ्क्रमण हुने तथा मृत्यु हुनेसम्मको जोखिम रहन्थ्यो।



जर्ज वासिङ्टनले समेत आफ्नो घाँटीमा भएको सङ्क्रमणको उपचार गर्न जानाजान रक्तस्राव गराएका थिए। यसैका कारणले उनको मृत्यु चाँडै भएको विश्वास गरिन्छ। चिकित्सा विज्ञानको बढ्दो ज्ञान तथा रक्तस्राव गराउने विधि जोखिमपूर्ण भएको अनुभूति भएपछि १९ औं शताब्दीमा आएर यस विधिको अभ्यास कम भएर गएको थियो। ■

*-युवामञ्च*

# संस्कृतिका धनी थारू

बहुजातीय, बहुभाषिक, बहुधार्मिक विविधताले भरिपूर्ण नेपालमा सबै जातजातिका आ–आफ्नै संस्कार, संस्कृति र परम्परा रहेका छन् । तिनमा आफ्नै खालको विशेषता पनि छ ।

नेपालको मेचीदेखि महाकालीसम्म तराई तथा भित्री मधेशमा प्राचीनकालदेखि थारू जातिले बसोबास गर्दै आएका छन् । थारू जाति नेपालको मूलवासी हुन् । भारोपेली भाषा परिवारभित्र पर्ने थारू भाषा नेपालमा नेपाली, मैथिली र भोजपुरीपछिको चौथो ठूलो सम्पर्क भाषा हो ।

थारूहरूको बसोबास रहेको भूगोललाई थरुहट, थारुवान, बुह्रान जस्ता नामले पनि सम्बोधन गरिन्छ । थारू समुदाय लोकसाहित्य तथा संस्कृतिको धनी मानिन्छ । माघी थारूहरूको नयाँ वर्षसहितको ठूलो चाड हो । होली, गुरिया, अष्टिम्की, अट्वारी, जितिया, दशैँ तिहार मुख्य चाड हुन् ।

थारूहरूको मुख्य पेशा कृषि हो तर अचेल पेशामा विविधीकरण देखिएको छ । थारू जातिको पुरोहितलाई गुरुवा वा भर्रा भनिन्छ । थारूहरूको पारिवारिक र सामाजिक चाडपर्व मनाइँदा गुरुवाको ठूलो भूमिका रहन्छ । थारूको कुलदेवता काली भगवती, मैया, गौरैया हुन् । यो जातिको हरेक घरमा कुलदेउता रहन्छन् । कुलदेउता रहेको ठाउँमा घरमूलीले नै सुत्नुपर्छ । थारूहरू बिहानको खाजालाई बासी, बिहानको खानालाई कल्वा, दिउँसोको खाजालाई मिझ्नी र साँझको खानालाई बेरी भन्छन् । थारू जातिको सम्मानसूचक सम्बोधन चौधरी हो ।

## संस्कार

संस्कार आफैँमा निर्विवाद रहन्छ । यो परम्परादेखि चलिआएको हुनाले सर्वमान्य पनि हुन्छ । यसर्थ थारू समाजमा पनि जन्मदेखि मृत्युपछिसम्मका विभिन्न संस्कार रहेका छन् । थारू संस्कारमा रक्सी अनिवार्य रहन्छ । संस्कार सम्पन्न गर्नका लागि थारू गुरुवाहरू रहने गर्छन् ।

## जन्म

थारू जातिमा बच्चा जन्मिने बेलामा तुरुन्त सुँडेनी (सोह्रिन्या)को व्यवस्था गरिन्छ । सोह्रिन्याले बच्चा जन्मदा



बच्चा र आमा दुवैलाई  सहयोग गर्छिन् । सोह्रिन्याले यसरी सहयोग गरिदिएबापत भेटीका रूपमा पैसा, अनाज, लत्ताकपडा पाउँछन् ।  थारू समाजमा जब बच्चा जन्मन्छ तब सुत्केरी आमा र बच्चाका लागि भनेर विशेष कोठाको व्यवस्था गरिन्छ । जसमा सुरक्षाको व्यवस्थासमेत गरिएको हुन्छ ।

उक्त कोठाभित्र पुरुषलाई पस्न दिइँदैन । बच्चाको नाभी नझरेसम्म घरका मान्छेबाहेक कसैले पनि सुत्केरी र बच्चा छुन पाउँदैनन् । थारू जातिमा बच्चाको नाम राख्ने विधि अन्य जातिको भन्दा फरक रहेको छ । थारू बच्चाको नाम राख्दा साइत, नक्षत्र, ग्रह आदि हेरेर राख्ने चलन छैन । नाम राख्दा बच्चा जन्मेको खासगरेर घटनाक्रम, दिन, महिना, स्थान, सामान आदिलाई आधार मानेर राख्ने गरिन्छ ।

जस्तै आइतबार जन्मेको बच्चाको नाम





अतवारी, अत्रि, सोमबार जन्मेको खण्डमा सोमप्रसाद, सोम्बा, सोम्ली, रेडियो बजिरहेको बेला जन्मेमा रेडिलाल आदि तर समय परिवर्तन भएसँगै अचेल आधुनिक जमानाका नाम राख्ने चलन बढ्दै गइरहेको छ ।

## विवाह

केही वर्षअघिसम्म थारू समुदायमा विवाह सानै उमेरमा गर्ने चलन थियो । त्यसमा पनि छोराको विवाह उमेर पुगेकी छोराभन्दा ठूली कन्यासँग विवाह गरिदिने परम्परा थियो तर अहिले यस्तो चलनमा क्रमशः सुधार आइरहेको छ । थारू समुदायमा विवाहका लागि तल्लो र उपल्लो जात वा थर भन्ने भेद छैन । सबै थरीकासँग एकआपसमा मन मिले बिनासामाजिक रोकतोक विवाह गर्न सकिन्छ तर थारूहरूले आफ्नो गोत्रभित्र पर्ने जतिसुकै पुरानो गोतियार भए पनि हाडनाता लाग्छ र विवाह चल्दैन ।

यस जातिमा विवाहका लागि ज्योतिष, पण्डित आदिको सहयोग लिएर केटा र केटीको जन्म कुण्डली हेरी ग्रह, नक्षत्र र साइत मिलाई राख्नुपर्दैन । फागुन महिनाको शनिबारबाहेक प्रायः सबै दिन विवाह गर्नका लागि उपयुक्त दिन मानिन्छ ।

## चाडपर्व तथा पूजा

चाडपर्व, संस्कृति मानिसको सामूहिक जीवनशैली हो । चाडपर्वले समुदायलाई खुशी, उत्साह दिने तथा जीवन्त बनाउने काम गर्छ ।

थारू जातिको अलग पहिचान दिने खालका आफ्नै भाषा, धर्म, संस्कृति एवं रीतिरिवाज छन् । जस्तै गुरही, फगुइ, अष्टिम्की, डस्या (दशैँ), डेवारी (तिहार), माघ, अट्वारी आदि मुख्य चाडपर्व हुन् भने हरेरी पूजा, लवाङ्गी पूजा, औली उतर्ना, धुर्रा लौसर्ना, टोक्टा, बगार पूजा, भजहर पूजा आदि मुख्य पूजापाठ हुन् ।

## मृत्यु संस्कार

थारू जातिमा मरेको मानिसको शरीरलाई जलाउने र चिहान खनी गाड्ने दुवै चलन रहेको छ । यस जातिमा शवलाई उत्तर सिरानी पारी पुरुष भए घोप्टो र महिला भए उत्तानो पारी घाटमा विधि विधानका साथ दाहसंस्कार गरिन्छ । थारू जातिमा १३औँ दिनमा चोखिने चलन रहेको छ । यस अवधिमा घरका अन्य सदस्यले तेल, बेसार खानु हुँदैन ।

मान्छे मरेपछि काजकिरिया सकी गरिने अन्तिम कर्मलाई थारू भाषामा मर्नीकर्नी वा दिन कर्ना भनिन्छ । १३औँ दिनमा भने परिवार, आफन्त, नातेदार, इष्टमित्र, गाउँलेलाई बोलाई मांसाहारी भोज खुवाउने चलन रहेको छ । ■

*-निशा चौधरी*

# च्यालेन्जरमा विलीन मकोलेफ




भर्खरै क्रिस्टा मकोलेफले च्यालेन्जर दुर्घटनामा ज्यान गुमाएकी हुन्, त्यस अभियानमा सहभागी हुने चुनौती सहर्ष स्वीकार गरेर उनी एक प्रेरणादायक कथा छाडेर गएकी छन् ।

सन् १९८४ अगस्त २७ मा राष्ट्रपति रोनाल्ड रेगनले एक जना शिक्षकलाई नासाले अन्तरिक्ष परियोजनामा सहभागी गराउन लागेको घोषणा गरेका थिए । करिब ११ हजार शिक्षकले अन्तरिक्ष यानमा सवार भएर अन्तरिक्षको यात्रा गर्नका लागि आवेदन गरे, जसमा ३६ वर्षीय क्रिस्टा मकोलेफ पनि थिइन् । न्यु ह्यापसायरको कनकोर्ड हाइस्कुलमा उनी सामाजिक विषय पढाउने गर्थिन् ।

लेबनानी मूलकी अरब–अमेरिकी मकोलेफले आफ्नो पेशाको प्रवर्धन तथा शिक्षकहरूको पैरवी गर्ने उत्तम अवसरका रूपमा यस अन्तरिक्ष अभियानलाई लिइन् । अर्को वर्ष नासाले आफूलाई अन्तरिक्ष अभियानमा पठाउन छनोट गरेको खबर पाएर उनी रोमाञ्चित भइन् ।

उपराष्ट्रपति जर्ज एच डब्ल्यु बुसले सन् १९८५ जुलाई १९ मा मकोलेफलाई अन्तरिक्ष अभियानका लागि छनोट गरिएको घोषणा गरेपछि उनले प्रतिक्रिया दिइन्, "एक शिक्षकसँग भन्नका लागि शब्द नै नहुने अवस्था प्रायः आउँदैन ।"

अन्तरिक्ष अभियानका लागि छनोट गरिएका अन्य व्यक्तिसँग घनिष्ठ मित्रता भएको कुरा गर्दै उनले भनेकी थिइन्, "जब यान माथि उठ्ने छ, त्यहाँ एक शरीर हुन सक्छ तर मसँगै त्यहाँ १० आत्मा हुने छन् ।"

सन् १९८६ जनवरी २८ मा च्यालेन्जर अन्तरिक्ष



यानसँगै मकोलेफले अन्तरिक्षका लागि उडान भरेको हेर्नका लागि अमेरिकाका स्कुले विद्यार्थी टेलिभिजन अगाडि झुम्मिए। पराकाष्ठामा पुगेको रोमाञ्च त्यतिबेला एकाएक चिन्ता र भयमा परिणत भयो जब प्रक्षेपण गरिएको ७३ सेकेन्डमै यान आकाशमा विस्फोट भयो।

त्यस दुर्घटनामा सबै सात अन्तरिक्ष यात्रीले ज्यान गुमाए। नासाका अधिकारीले यस सन्दर्भमा घोर अनुसन्धान गर्नु पर्‍यो तथा शिक्षक र विद्यार्थी यस घटनाले नराम्रोसँग आहत भए तर नासाको अभियानमा मकोलेफको अग्रणी भूमिकाबाट प्रेरित भएर अन्ततः अमेरिकी शिक्षकहरूले अन्तरिक्षको यात्रा गरे।

क्रिस्टा मकोलेफलाई नासाको पहिलो गैरपारम्परिक अन्तरिक्ष यात्री मानिँदैन। च्यालेन्जर यानमा उनले पाइला टेक्ने बेलासम्म नासाले प्रचारबाजी र कोष व्यवस्थाका लागि अन्तरिक्ष अभियानमा जाने यानमा राजनीतिक हस्तीहरूलाई पहिले नै सिट उपलब्ध गराइसकेको थियो। सिनेटर जेक गार्न, साउदी अरबका राजकुमार सुल्तान इब्न सलमान अल साउद र कङ्ग्रेसका सदस्य बिल नेल्सनले सन् १९८५ अप्रिलदेखि सन् १९८६ जनवरीको अवधिमा अन्तरिक्षको यात्रा गरिसकेका थिए। नेल्सन त पछि सन् २०२१ मा नासाको प्रशासक पनि भए।

सन् १९६९ मा चन्द्रमामा मानिसलाई उतारेको नासालाई त्यसपछि आवश्यक कोषको अभाव हुन थाल्यो। उसले लोकप्रियतासमेत गुमाउन थालेको थियो। यस्तो अवस्थामा नासाले सामान्य अमेरिकीलाई समेत अन्तरिक्षमा पठाएर अमेरिकी अन्तरिक्ष अभियानमा जनरुचि पुनर्जागरण गर्ने कोसिस गर्न थाल्यो र त्यसैको एक हिस्सा थियो अन्तरिक्षमा शिक्षक पठाउने प्रयास।

एक आवेदकका रूपमा मकोलेफलाई के चिन्ता थियो भने अन्य प्रतिस्पर्धी जति आफूसँग विज्ञान अध्ययनको बलियो पृष्ठभूमि वा अन्य खालका उपलब्धि छैनन् तर 'द बर्निङ ब्ल्यु : द अनटोल्ड स्टोरी अफ क्रिस्टा मकोलेफ एन्ड नासाज च्यालेन्जर डिजास्टर' पुस्तकका लेखक केभिन कुकका अनुसार नासाले जे कुरा खोजिरहेको थियो त्यसका लागि त्यो आवश्यक थिएन।

उनले भनेका छन्, "नासाले यस्तो व्यक्तिको खोजी गरिरहेको थियो जसले अन्तरिक्ष अभियानका बारेमा जनमानसलाई पुनः उत्साहित बनाउन सकोस्।"

कुकले अगाडि लेखेका छन्, "अन्तरिक्ष यानमा सवार भएर अन्तरिक्षमा जाने विलक्षण क्षमतायुक्त स्कुले विज्ञान शिक्षक उनीहरूलाई आवश्यक थिएन, उनीहरूसँग सबैतिर वैज्ञानिक थिए। एक सहभागीले मलाई भने अनुसार उनीहरूलाई यस्तो व्यक्ति चाहिएको थियो जसले जोनी कार्सन 'सो' भन्दा राम्रो प्रदर्शन गर्न सकोस्।"

सन् १९८५ मा मकोलेफलाई छनोट गरिएपछि उनी तत्काल राष्ट्रियस्तरको व्यक्तित्व बनिहालिन्। उनले अन्तर्वार्ता दिइन् तथा 'द टुनाइट सो स्टारिङ जोनी कार्सन' कार्यक्रममा देखा परिन्। मकोलेफले दिएका



धेरैजसो अन्तर्वार्तामा उनले आफूले पाएको मञ्चलाई शिक्षण सेवाप्रति आफ्नो लगाव बारेमा कुरा गर्न तथा शिक्षकका मुद्दा प्रवर्धन गर्न प्रयोग गरिन् ।

मकोलेफले टेक्ससको ह्युस्टनमा रहेको 'लेन्डन बी. जोनसन स्पेस सेन्टर' मा आफ्नो वैकल्पिक बार्बरा मोर्गनसहित छनोट भएका अन्य छ जनासँगै कैयौँ महिना विशेष प्रशिक्षण लिइन् । चालकदलमा सहभागी अन्तरिक्ष यात्रीलाई अन्तरिक्ष यान सञ्चालन गर्ने जिम्मेवारी त थियो । मकोलेफले 'पेलोड स्पेसलिस्ट' को जिम्मेवारी पाइन् र अन्तरिक्षमा बाँच्ने तरिकाको तालिम उनलाई दिइयो । साथै अन्तरिक्ष यानमा रहँदा पढाउन सक्ने गरी विज्ञानका अध्यायको समेत उनले अभ्यास गरिन् ।

अन्तरिक्ष परियोजनामा शिक्षक सहभागिताको ठूलो लोकप्रियता देखेर नासाले मकोलेफद्वारा आफ्नो अभियान सुरु गरिनु पहिले नै अन्तरिक्ष कार्यक्रममा पत्रकारलाई सहभागी गराउने घोषणा गर्ने निर्णय लियो । त्यसका लागि सन् १९८६ जनवरीसम्म म्याद तोकेर आह्वान गरिएको विज्ञापनमा ठूलो आशाका साथ आवदेन दिने एक हजार ७०३ जनामध्ये वाल्टर क्रोन्काइट, छम ब्रोका, साम डोनाल्डसन र गेराल्डो रिभेराको नाम पनि थियो तर च्यालेन्जर दुर्घटनामा परेपछि नासाले पत्रकारलाई अन्तरिक्षमा पठाउने



कार्यक्रम चाँडै नै स्थगित गरिदिने भयो ।

सन् १९८६ जनवरी २८ को दिन बिहान च्यालेन्जर यानलाई अन्तरिक्षमा प्रक्षेपण गर्न जोडतोडले काम चलिरहेको थियो। मकोलेफका पति, बच्चा र आमाबुवा च्यालेन्जरसँगै उनले उडान भरेको हेर्न फ्लोरिडाको केप केनाभरलमा मेला भएका थिए। मौसम अनुकूल नभएका कारण नासाले धेरै दिनदेखि यान प्रक्षेपणमा ढिलाइ गरिरहेको थियो र अघिल्लो दिनसमेत अन्तिम समयमा प्रक्षेपण रोक्नु परेको थियो। लगातार दोस्रो दिन चालकदलका सदस्य यानमा चढे र उडान भर्ने तयारीमा जुटे । यस पटक निर्धारित समयमा च्यालेन्जर अन्तरिक्षतिर हुइँकियो र त्यस घटनालाई प्रत्यक्ष हेरिरहेका दर्शक खुसीले गदगद भए तर चाँडै ती सबैजनाले नचिताएको घटना देख्नु पर्‍यो– यान आकाशमा विस्फोट भयो ।

प्रक्षेपणका बेला उपस्थित पत्रकार बब होलरले त्यस दिनको घटना सम्झँदै प्रतिक्रिया दिएका छन्, “हामीमध्ये कसैले पनि प्रक्षेपण प्रत्यक्ष देखेका थिएनौं, यसर्थ वास्तवमा के भएको थियो स्पष्ट छैन। केही प्रत्यक्षदर्शीले यानका ठोस ‘रकेट बुस्टर’ यानबाट अलग भएको ठाने र आफूले जे देखेको हो त्यसबारेमा उनीहरूलाई थाहा थिएन। उनीहरूले दुर्घटना भएको सोचेका पनि थिएनन् ।”

नासाका सार्वजनिक मामिला अधिकारीले स्टिव नेसबिटले चकित पार्ने घोषणा गरेपछि मानिसहरू केही न केही गडबड भएको ठाने, जुन घोषणा टेलिभिजन हेरिरहेका मानिसले समेत सुने, “यहाँका उडान नियन्त्रकले परिस्थितिलाई गम्भीरतापूर्वक हेरिरहेका छन्। स्पष्ट रूपमा भन्नु पर्दा एक भयङ्कर खराबी आएको छ ।”

**च्यालेन्जरका कमान्डर डिक स्कोबीकी श्रीमती जुन स्कोबी रोजर्सले विद्यार्थीलाई विज्ञान र इन्जिनियरिङका बारेमा पढाउन स्थापना गरिएका कैयौं च्यालेन्जर सेन्टरमध्ये पहिलो सेन्टर सन् १९८६ मा स्थापना गरिन् ।**



अनि एक मिनेटपछि उनले भने, “हामीलाई ‘फ्लाइट डायनामिक्स अफिसर’ बाट प्राप्त सूचना प्राप्त भएको छ, यान विस्फोट भयो ।”

प्रक्षेपण हेरिरहेका धेरै जनाले ठाने यानका चालक दलका सबै सदस्यको तत्काल मृत्यु भयो तर पछि गरिएको अनुसन्धानबाट के थाहा भयो भने आफ्नो सुरक्षित कक्षमा रहेका चालकदलका सदस्य सुरुको विस्फोटमा बचे र त्यो कक्ष बजारिएर सबै जनाको ज्यान गयो। दुर्घटनाका विषयमा गरिएको अनुसन्धानबाट थाहा भयो यानका ठोस ‘रकेट बुस्टर’ मा रहेका ‘ओ–रिङ’ ले चिसो तापक्रममा कस्तो प्रतिक्रिया देखाउने हुन् भन्ने बारेमा पहिल्यै चिन्ता जनाइएको थियो तर नासा तथा ‘बुस्टर’ निर्माता कम्पनी मोर्टन थियोकोलका निर्णयकर्ताले त्यसबारेमा इन्जिनियरहरूले दिएको चेतावनी बेवास्ता गरेका रहेछन् ।

“सुरुका दिन दुःख, शोक व्यक्त गर्नमा गए,” ‘आई टच द फ्युचर : द स्टोरी अफ क्रिस्टा मकोलेफ’ पुस्तकका लेखक होलरले भनेका छन्, “व्यापक जनआक्रोश देखिन समय लाग्यो। जुन घटना भएको थियो त्यसबारेमा जति हामीले थाहा पाउँदै गयौं त्यस अनुसार नै आक्रोश बढ्यो। हामीमध्ये धेरैजसोलाई महसुस नै भएन यो कति खतरनाक थियो ।”

यस दुर्घटनाप्रति चालकदलका सदस्यका परिवारको बेग्लाबेग्लै प्रतिक्रिया थियो। च्यालेन्जरका कमान्डर डिक स्कोबीकी श्रीमती जुन स्कोबी रोजर्सले विद्यार्थीलाई विज्ञान र इन्जिनियरिङका बारेमा पढाउन स्थापना गरिएका कैयौँ च्यालेन्जर सेन्टरमध्ये पहिलो सेन्टर सन् १९८६ मा स्थापना गरिन्। यस संस्थाले च्यालेन्जरको चालकदलका सदस्य ग्रेगोरी जार्भिस, क्रिस्टा मकोलेफ, रोनाल्ड म्याकनेयर, इलिसन ओनिजुका, जुडिथ रासनिक, डिक स्कोबी र माइकल स्मिथको स्मृति संरक्षणको काम समेत गर्दछ।



यस दुर्घटनाका कारण नासाले अन्तरिक्ष अभियानमा शिक्षकलाई सरिक गराउने कार्यक्रम रद्द गर्‍यो तर यसबाट शिक्षकसँग नासाको सहयोग यात्रा भने समाप्त भएन। सन् २००० को सुरुका दिनमा नासाले शिक्षकलाई पूर्णतया अन्तरिक्ष यात्री बनाउन प्रशिक्षित गर्नका लागि 'एजुकेटर एस्ट्रोनट प्रोग्राम' थालनी गर्‍यो। 'टिचर्स इन स्पेस प्रोजेक्ट' मा मकोलेफको वैकल्पिक प्रशिक्षार्थी रहेकी शिक्षक बार्बरा मोर्गन नयाँ कार्यक्रम अन्तर्गत सन् २००७ मा अन्तरिक्षमा गइन्। सन् २०१० मा हाइस्कुलका विज्ञान शिक्षक डोयटी मेटकाफ-लिन्डेनबर्गर डिस्कभरी यानमा एक विशेषज्ञका रूपमा अन्तरिक्षमा गइन् र त्यहाँ तीन सय ६२ घण्टाभन्दा बढी समय व्यतीत गरेर फर्किइन्।

जतिबेला च्यालेन्जर दुर्घटना भएको थियो मेटकाफ-लिन्डेनबर्गर पाँच कक्षामा पढ्थिन्। विज्ञानमा रुचि राख्ने मेटकाफ-लिन्डेनबर्गरका आमाबुवा पनि शिक्षक नै थिए। अन्तरिक्षमा पहिलो पटक शिक्षक पठाउन लागेको हेर्न पाउँदा उनी निकै उत्साहित थिइन्। च्यालेन्जर दुर्घटना भएपछि मेटकाफ-लिन्डेनबर्गरले आफ्नी आमालाई सोधेकी थिइन्, "चालकदलका सदस्य कसरी मरे।"



मेटकाफ-लिन्डेनबर्गरको अन्तरिक्षमा जाने सपना न त च्यालेन्जर दुर्घटनाले न त सन् २००३ फेब्रुअरी १ मा भएको कोलम्बिया दुर्घटनाले नै साकार हुनबाट रोक्न सकेन। अन्तरिक्षबाट पृथ्वीमा फर्किने बेला कोलम्बिया वायुमण्डलमा टुक्राटुक्रा हुँदा सबै सात यात्रुको मृत्यु भएको थियो। त्यतिबेला मेटकाफ-लिन्डेनबर्गर 'एजुकेटर एस्ट्रोनट प्रोग्राम' का बारेमा थाहा पाएकी थिइन् र त्यसपछि उनले त्यस कार्यक्रममा सहभागी हुने निधो गरिन्।

मेटकाफ-लिन्डेनबर्गरले भनेकी छन्, "अन्तरिक्षमा उडान भर्नुमा ठूलो खतरा छ भन्ने थाहा पाउँदा पाउँदै पनि मैले आवेदन गरेँ।" उनी हाल च्यालेन्जर सेन्टरको बोर्ड सदस्य छिन्। ■

*– उमेश ओझाद्वारा हिस्ट्रीबाट अनुवादित र सम्पादित।*

# RIPLEY'S Believe It or Not!®




जतिबेला आइज्याक न्युटनले गुरुत्वाकर्षणको सर्वमान्य सिद्धान्त प्रतिपादन गरे, उनी मात्र २३ वर्षका थिए ।




अमेरिकाको 'ट्याक्स कोड' शेक्सपियरको सम्पूर्ण कृतिको भन्दा चार गुणा लामो छ ।



सन् २०२३ मा अनुसन्धानकर्ताले स्पेनको एउटा गुफामा छ हजार वर्षभन्दा पुरानो एक जोडी चप्पल भेटाएका थिए ।

# अनुत्तरित विमान दुर्घटना

**व्यावसायिक हवाई दुर्घटना निकै दुर्लभ मानिन्छ । इन्टरनेसनल एयर ट्रान्सपोर्ट एसोसिएसन (आइएटिए) का अनुसार प्रत्येक वर्ष विश्वमा यात्रुवाहक विमानको तीन करोडभन्दा बढी फ्लाइटले कुनै अप्रिय घटनाबिना उडान भर्ने र अवतरण गर्दछन् । सन् २०२२ को तथ्याङ्कलाई हेर्दा पनि यात्रुको ज्यान जाने गरी पाँच वटा मात्र घातक दुर्घटना भएका थिए ।**




सुरक्षा जाँचकर्ताले यात्रुवाहक विमान दुर्घटनाको कारण पत्ता लगाउनमा प्रायः सफलता पाउँछन् तर समुद्र तटबाट टाढा भएको दुर्घटनामा उनीहरूको कार्य निकै कठिन हुन जान्छ । केही मामिलामा यात्रुवाहक विमान आफ्नो गन्तव्यमा पुग्न असफल हुँदा विमान हावामा यसरी गायब भए– न त रेडियो सन्देश छ न त भग्नावशेष नै फेला पर्‍यो, कोही जीवित पनि भेटिएनन्, यतिसम्म कि दुर्घटना स्थलको सङ्केत दिन सक्ने पोखिएको इन्धनसमेत देखिएन ।

निम्न पाँच यात्रुवाहक विमानको अवस्था इतिहासमा निकै रहस्यमय मानिएको छ :

### इजिप्टएयर फ्लाइट ८०४ (सन् २०१६, मे १९)

फ्रान्सको पेरिसबाट इजिप्टको कायरोका लागि ६६ यात्रु लिएर उडान भरेको एयरबस–३२० को 'डिजिटल फ्लाइट डाटा' र 'ककपिट भ्वाइस रेकर्डर' विमानको भग्नावशेषबाट निकालिए पनि पूर्वी भूमध्यसागरको १३ हजार फिट गहिराइमा डुब्ने गरी यो विमान दुर्घटना हुनुको कारण पत्ता लागेन ।

सुरुका महिनामा गरिएको अनुसन्धानबाट इजिप्टको नागरिक उड्डयन मन्त्रालयले आतङ्कवादीको बम विस्फोटबाट विमान दुर्घटना भएको र यात्रुको अवशेषमा विस्फोटक पदार्थको सङ्केत मिलेको जानकारी दिएको थियो । तथापि इजिप्टको नागरिक उड्डयन ब्युरोले सन् २०१८ मा आफ्नो अनुसन्धान प्रतिवेदन सार्वजनिक गरेर ककपिटमा तेज गतिले

आगो फैलिँदा विमान दुर्घटना भएको उल्लेख गऱ्यो ।

राडारबाट विमान बेपत्ता हुनु केही समयपहिले 'एयर ट्राफिक कन्ट्रोलर'हरूले विमानमा रहेको 'रिपोर्टिङ सिस्टम' बाट प्रसारित भई आएको धुवाँ (आगलागी)को सङ्केत प्राप्त गरेका थिए । 'रिकर्डर'ले विमानमा धुवाँ रहेको पुष्टि गरेको थियो । फ्रान्सेली अधिकारीहरूले राडारबाट लुप्त हुनुपहिले विमानले असामान्य रूपमा बायाँतिर मोडियो र त्यसपछि दायाँतिर ३६० डिग्रीको मोड लिएको बताए । यदि बम विस्फोट नै भएको भए यस्तो विचित्रको उडान देखिने थिएन । धुवाँ बाहिर निकाल्नका लागि अन्तिम समयमा विमान असामान्य रूपमा उडेको विश्लेषण उनीहरूको छ । पाइलटले चुरोट पिउन थाल्दा चुहावट भइरहेको अक्सिजन मास्कका कारण आगलागी भएको हुन सक्ने सम्भावना व्यक्त गरिए पनि यो विमान दुर्घटनाको रहस्य खुलेको छैन ।

## मलेसिया एयरलाइन्स फ्लाइट एमएच ३७० (सन् २०१४ मार्च ८)




**विमानले अचानक आफ्नो उडानपथ परिवर्तन गरी पश्चिम दिशामा हिन्द महासागरतिर उड्न थालेको र त्यसपछि विमान सङ्केत गुमाएर बेपत्ता भएको सैन्य राडारले देखाएको थियो ।**

मलेसियाको क्वालालम्पुरबाट चीनको बेइजिङका लागि दुई सय ३९ यात्रुसहित उडान भरेर बिनाकुनै चिह्न छाडेर बेपत्ता भएको बोइङ ७७७ ले सारा संसारको ध्यान आकर्षित गऱ्यो तथा व्यापकस्तरमा यसको खोज र अनुसन्धान गरियो । उडान भरेको ३८ मिनेटपछि 'साउथ चाइन सी' माथि रहँदा अन्तिम पटक सञ्चार गरेको यस विमानले अचानक आफ्नो उडानपथ परिवर्तन गरी पश्चिम दिशामा हिन्द महासागरतिर उड्न थालेको र त्यसपछि विमान सङ्केत गुमाएर बेपत्ता भएको सैन्य राडारले देखाएको थियो ।

केही उड्डयन विज्ञको विश्वास थियो इन्धन सकिन्जेलसम्म दक्षिण हिन्द महासागरमाथि विमानले उडान भरेको हुन सक्छ । यसका लागि उड्डयन इतिहासमा सबैभन्दा व्यापक र खर्चिलो खोजी अभियान सुरु गरियो । तीन सय ३४ फ्लाइटले खोजी गरियो र गहिरो समुद्रको करिब ७५ हजार वर्ग किलोमिटर क्षेत्रफलमा खोजबिन गर्दा पनि विमानको न त भग्नावेशष नै फेला पऱ्यो, न त पोखिएको इन्धन नै ।

मडागास्कर, मौरिसस, रियुनियन र रोड्रिगेज टापुका साथै तान्जानियासम्मका अफ्रिकी समुद्री तटमा विमानका सम्भावित करिब २० थान टुक्रा मिले र ती फ्लाइट एमएच ३७० को भएको विश्वास गरियो । सन् २०१८ मा मलेसिया सरकारले जारी गरेको अनुसन्धान प्रतिवेदनमा विमानको अवस्थाका बारेमा केही उल्लेख गरिएन । बरु विमानमा प्राविधिक वा कम्प्युटर त्रुटि नभएको तर तोकिएको मार्गबाट विचलित भएर अर्कै दिशामा विमानले उडान भर्नु र विमानको 'ट्रान्सपोन्डर' बन्द गरिनुले गैरकानुनी हस्तक्षेप भएको बलियो सङ्केत गर्दछ भन्यो । जुन तर्कले विमान यात अपहरणमा परेको या पाइलटको बदमासी दर्शायो ।

## फ्लाइङ टाइगर लाइन फ्लाइट (सन् १९६२ मार्च १६)

भियतनाम युद्धको सुरुका दिनमा सैन्य विमानबाट यात्रा नगरी फ्लाइङ टाइगर लाइनको चार्टर्ड फ्लाइटद्वारा ९३ जना अमेरिकी रेन्जरले गोप्य अभियानका लागि सैगोन जान क्यालिफोर्नियाको 'ट्रेभिस एयर फोर्स बेस' बाट उडान भरेका थिए । गुआम पुगेर विमानमा इन्धन पुनर्भरणपछि उनीहरूसहित दक्षिण भियतनामको सेनाका तीन सदस्य र चालकदलका ११ सदस्य सवार 'लकहिड एल–१०४९ सुपर कस्टिलेसन' आफ्नो अर्को गन्तव्य फिलिपिन्सको 'क्लार्क एसर बेस' मा कहिल्यै पुगेन । विमान उडानका लागि मौसम राम्रो थियो र विमानबाट कुनै अप्रिय सङ्केतसमेत आएको थिएन ।

सन् १९३७ मा अमेलिया इयरहर्टको खोजीमा जत्तिको जोडबल लागेको थियो त्यसपछि पहिलो पटक व्यापकस्तरमा यस विमानको खोजीका लागि शान्तिकालमा हवाई र समुद्री उद्दार प्रयास गरियो। १३ सय जनाको खोजी दलले करिब दुई लाख ३० हजार वर्ग किलोमिटर क्षेत्रफलमा खोजबिन गऱ्यो तर केही पनि हात लागेन।

इटालीको तेल बोक्ने ठूलो पानीजहाजको चालकदलका एक सदस्यले आकाशमा विस्फोटसँगै एक चम्किलो प्रकाश देखेको र विमान जुन क्षेत्रमा बेपत्ता भएको थियो त्यहाँको समुद्रमा जल्दै गरेका दुई वस्तु खसेको जानकारी दिए। केही घण्टापहिले मात्र अलास्कामा फ्लाइङ टाइगरको अर्को विमान त्यसमा सवार सातमध्ये एक जनाको मृत्यु हुने गरी दुर्घटना भएको घटनालाई हेर्दा विमानमा छेडखानी गरिएको अनुमान गरियो तर 'सिभिल एयरोनोटिक्स बोर्ड' ले विमानको कुनै पनि अवशेष फेला नपरेको कारण जनाएर दुर्घटनाको कुनै सम्भावित कारण निर्धारण गर्न सकेन।



**पान एम फ्लाइट ७ (सन् १९५७ नोभेम्बर ९)**

विश्व भ्रमणका लागि ३६ यात्रु र चालकदलका आठ सदस्यसहित सान फ्रान्सिस्कोबाट होनोलुलुका लागि उडान भरेको बोइङ-३७७ स्ट्राटोक्रुजरमा विलासिताको वातावरण थियो। त्यहाँ खानपिन, आराम, मनोरञ्जनको व्यवस्था राम्रो थियो। यस विमानले करिब आधा दूरी के तय गरेको थियो, बिनाकुनै गडबडीको सङ्केत दिएर विमान राडारबाट गायब भयो।

केही दिन खोजतलास गरेपछि अमेरिकी जलसेनाको पानीजहाजले होनोलुलुबाट करिब १६ सय किलोमिटर पूर्व समुद्रमा केही टुक्राटाक्री तैरिरहेको र १९ यात्रुको शव फेला पाऱ्यो।

अधिकांश यात्रुले 'लाइफ भेस्ट' लगाएको देखियो। जसबाट के अनुमान गरियो भने विमान प्रशान्त महासागरमा बजारिने अवस्था आउँदा उनीहरूले 'लाइफ भेस्ट' लगाएको हुनु पर्छ। विमान र अन्य २५ जनाको अवस्था कहिल्यै थाहा हुन सकेन। अनुसन्धानबाट थाहा भयो बरामद गरिएका अधिकांश शवमा कार्बन मोनोक्साइडको मात्र धेरै थियो तर दुर्घटनाको यकिन कारण रहस्यमै रहेको छ।



**क्यानेडियन प्यासिफिक एयरलाइन्स (सन् २०५१ जुलाई २१)**

जसै कोरियाली युद्ध चर्कियो कोरियाली हवाई सहयोगका लागि एक डगलस डिसी-४ विमानले जापानको टोकियो जान भ्यानकोभरबाट उडान भऱ्यो। ३१ यात्रु र चालकदलका छ सदस्यसहित उडेको क्यानेडियन प्यासेफिक एयरलाइन्सको विमान अलास्काको एन्करेजमा इन्धन पुनर्भरणका लागि त्यहाँ पुग्नै लाग्दा घनघोर वर्षाले अगाडि केही नदेखिने र अत्यन्त चिसो वातावरणमा फस्यो।

अवतरणका लागि ९० मिनेट बाँकी छँदा अलास्काको एक सङ्कीर्ण भूभाग नजिकबाट विमानले कुनै पनि खालको समस्या नभएको जनाएको थियो। त्यसपछि त्यस विमानको कुनै पत्तो भएन। अमेरिकी र क्यानेडेली उद्दार टोलीले महिनौँसम्म विमानको खोजी गरे तर विमानको कुनै अवशेष खोज्न सकिएन। ■

*-युवामञ्च*

# गरुडको महिमा

■ उद्धवप्रसाद भट्टराई



**हाम्रो धर्मशास्त्रमा उल्लेख भएनुसार विभिन्न देवीदेवताको आ–आफ्ना किसिमका वाहन रहेका छन् । गणेशको वाहन मुसो, कुमारको मयूर, पार्वतीको बाघ, भैरवको कुकुर, इन्द्रको हात्ती र शिवको वाहन साँढे भएजस्तै विष्णुको वाहन गरुड हो । यहाँ विष्णु भगवान्को वाहन गरुडका सन्दर्भमा केही चर्चा गरिएको छ ।**

विष्णु पुराणमा गरुडको महिमा विशेष रूपमा गरिएको छ । गरुड उड्ने पन्छी हो । जसलाई पन्छीहरूका राजा र भगवान् विष्णुको वाहन मानिएको छ । यस पन्छीले सर्प, भानेमुङ्ग्रोलाई खाइदिन्छ । त्यसैले सर्पले दुःख दियो भने गरुडको नाम लिनु भन्छन् ।

गरुड एक किसिमको चरा जाति हो । यसको प्राचीन कथालाई हेर्दा एक पन्छी कसरी भगवान्को वाहन हुन पुग्यो ?, यसको उत्पत्ति कसरी भयो ? भन्ने कथा रोचक छ । गरुडलाई कश्यप ऋषि र विनीताका पुत्र भनिएको छ । विनीता दक्ष प्रजापतिकी कन्या थिइन् । गरुडको दाजुको नाम अरुण हो, जो भगवान् सूर्यको रथका सारथि हुन् ।

पन्छीराज गरुडलाई जीव विज्ञानमा लेप्टोटाइल्स जावानिकस भनिन्छ । यो 'इन्टरनेसनल युनियन कन्जरभेसन अफ नेचरको रेड लिस्ट' या विलुप्तप्रायः पन्छीको श्रेणीमा समावेश छ । यसको अर्थ गरुडलाई पृथ्वीमा कम पाइने पन्छीको दर्जामा राखिएको छ ।

प्राचीनकालमा मन्दिरहरूको द्वारमा एकातिर गरुड र अर्कातिर हनुमानको मूर्ति आवेष्ठित गर्ने गरिन्थ्यो । अहिले पनि कतिपय मन्दिरमा गरुड र हनुमानको मूर्ति राखिएको देख्न सकिन्छ । काठमाडौँ उपत्यकाका पुराना मन्दिरका द्वारहरूमा गरुड र हनुमानको मूर्ति राखिएको छ । पहिले–पहिले घरमा राखिएका मन्दिरमा पनि गरुड, घण्टी र मन्दिरको शिखरमा गरुडध्वज हुन्थ्यो ।

भगवान्को वाहन भए पनि गरुडलाई भगवान्कै रूपमा लिने गरिन्छ । गरुड नामको एक व्रत पनि छ । गरुड नामको एक पुराण पनि छ । मान्छे मरेर गएपछि किरियापुत्री र शोकमा रहेका आफन्तलाई पण्डित बोलाई नौ दिनसम्म गरुडपुराण सुन्ने र सुनाउने चलन अद्यापि समाजमा

चलिरहेको छ। पन्छीराज गरुडको अनेक नाम छन्। ती हुन् विनायक, गरुत्मत्, नागान्तक, विष्णुरथ, खगेश्वर, सुपर्ण र पन्नगाशन आदि।

अब प्रश्न के उठ्छ भने आखिर के पन्छी मानव जस्तै रूपको, बोल्ने, कुरा गर्ने हुन सक्छ त ? कश्यप र विनीताबाट जन्मेका गरुड कसरी पन्छी भए। कश्यप मनुष्य रूपमा थिए तर गरुडलाई उड्ने प्राणीका रूपमा लिइन्छ। गरुडको स्वरूपलाई हेर्दा शरीर मनुष्यको जस्तो र मुख तथा पखेटाले गर्दा चरा जस्तो देखाइएको छ।

पुराणहरूमा भगवान् गरुडको पराक्रमका बारेमा प्रशस्त कथाको वर्णन छ। उनले देवताहरूसँग युद्ध गरी तिनीहरूसँग अमृत कलश खोसेका थिए। उनले भगवान् रामलाई नागपाशबाट मुक्त गराएका थिए। किनकि गरुड यस्ता पन्छीराज हुन् जसले नाग अर्थात् सर्पलाई खाइदिन्छ। त्यसैले सर्प गरुडको नाम लिनासाथ भाग्छ भन्ने भनाइ छ। एक समय गरुडलाई आफ्नो शक्तिमाथि धेरै घमण्ड भएको थियो। त्यो घमण्डलाई रामभक्त हनुमानले चुरचुर गरिदिएका थिए।

गरुडलाई हिन्दु धर्मका साथै बौद्ध धर्ममा पनि महत्त्वपूर्ण पन्छीका रूपमा मानिएको छ। बौद्ध ग्रन्थहरूका अनुसार गरुडलाई सुपर्ण (राम्रा पङ्ख भएको) जीव भनिन्छ। जातक कथाहरूमा पनि गरुडका बारेमा कतिपय रोचक किस्सा छन्। गुप्त कालका शासकहरूको प्रतीक चिह्न पनि गरुड नै थियो। कर्नाटकका होयसल शासकहरूको पनि प्रतीक चिह्न गरुड थियो। अमेरिका र इन्डोनेसियाको राष्ट्रिय प्रतीक चिह्न पनि गरुड नै छ। यसैले गरुडलाई चामत्कारिक पन्छीका रूपमा लिइनु स्वाभाविक नै छ।

भारतको चेन्नई शहरबाट ६० किलोमिटर टाढा एक महत्त्वपूर्ण तीर्थस्थल छ 'पन्छी तीर्थ'। यो तीर्थस्थल वेदगिरि पर्वतको माथि छ। कैयौँ शताब्दीदेखि अपराह्नको समयमा एक जोडी गरुड सुदूर आकाशबाट यस मन्दिरमा आउँछन् र मन्दिरको पुजारीद्वारा दिइएको खाद्यान्न ग्रहण गरी पुनः आकाशमा फर्किन्छन् भन्ने कथा त्यहाँ सुन्न पाइन्छ। सयौँ मानिस त्यस एक जोडी गरुडको दर्शन गर्नका लागि त्यहाँ उपस्थित हुने गर्छन्। त्यहाँका विद्वान् अन्वेषकको भनाइ अनुसार सत्य युगमा ब्रह्माका आठ मानसपुत्रले शिवलाई दुःख दिएका थिए।

अनि शिवको श्रापले ती आठ मानसपुत्र गरुड बनेको भनिन्छ। उनीहरूमध्ये दुई जना सत्य युगको अन्त्यमा मुक्त भए। अर्का दुई जना त्रेताको अन्त्यमा मुक्त हुन पुगे। अर्का दुई जना द्वापरको अन्त्यमा



श्रापबाट मुक्त भए। के भनिएको छ भने बाँकी दुई जना मानसपुत्र गरुड रूपमा संसारमा विचरण गरिरहेका छन्। अर्थात् अब बाँकी रहेका ती दुई जना कलियुगको अन्त्यमा मुक्त हुने छन्।

नाग देवताको दोष छ भने पनि गरुडको नाम लिने र पूजा गरेमा समाप्त हुने रहेछ भन्ने ज्ञान मिल्छ। दार्शनिक भाषामा नाग भनेको प्राण हो। प्राणरूपी नागपाशले यो जीवात्मालाई बाँधेको छ। त्यो नागलाई गरुडले खाएर हामीलाई मुक्त गरिदिन्छ भन्ने भाव पनि गरुडको नामले दिन्छ। अर्को कुरा यो प्राणी पृथ्वीमा लोप हुन गइरहेको पन्छी भएको हुँदा यसको संरक्षण र संवर्धन गर्नु पर्दछ।

यसैले विष्णुको वाहन गरुडको कथा हाम्रो सनातन धर्म-संस्कृतिको आश्चर्यपूर्ण, रहस्यमय र महत्त्वपूर्ण मानिएको छ। गरुड पन्छीको चरित्र रहस्यपूर्ण, अलौकिक र जान्नयोग्य चिन्तन रहेछ भन्ने ज्ञान पनि हामीले पाउन सक्छौँ। अर्को महत्त्वपूर्ण के छ भने गरुड नामको पुराण सुनेर जीवनलाई धन्य बनाउनुपर्ने रहेछ भन्ने ज्ञान गरुडबाट मिल्छ। ■




# भरपर्दो फिङ्गर प्रिन्ट



■ अजय शर्मा

अहिले डिजिटल दुनियाँमा फिङ्गरप्रिन्ट (औँठा छाप) र फेस आइडी (बायोमेट्रिक अथन्टिकेसन) लाई विश्वसनीय र भरपर्दो सुरक्षा उपायका रूपमा लिने गरिन्छ। सुरक्षाका दृष्टिकोणबाट हेर्दा फिङ्गर प्रिन्ट अथन्टिकेसनको विश्वसनीयता ९८ देखि ९९.९१ प्रतिशतसम्म रहेको विभिन्न अध्ययनले देखाएको छ।

यति भनिरहँदा फिङ्गर प्रिन्टलाई डिजिटल अथन्टिकेसनको मुख्य र अन्तिम विकल्पका रूपमा लिनु भने हुँदैन। सूचना प्रविधिको क्षेत्रमा पिन कोड, पासवर्ड, प्याटर्न लकलगायतका प्रविधिसमेत प्रचलनमा छन्। पछिल्लो र सुरक्षित मानिएको फिङ्गर प्रिन्ट सेन्सर प्रयोग गरी मोबाइल डिभाइस सुरक्षित गर्ने प्रविधिको प्रयोगबाट प्रयोगकर्ताले सजिलै आफ्नो औँठा छापबाट लक/अनलक गर्न सक्छन्। यो प्रविधिको विकासपछि प्रयोगकर्ताहरू पटक–पटक

पासवर्ड वा पिन राख्नुपर्ने र याद गरिराख्न पर्ने अवस्थाबाट मुक्त भएका छन् ।

मोबाइल फोनको सुरक्षाका लागि तपाईंले फिङ्गर प्रिन्ट वा फेस आइडीका अतिरिक्त अन्य विकल्प पनि प्रयोग गर्नुपर्छ । बायोमेट्रिक अथन्टिकेसन भएको वा नभएको मोबाइल डिभाइसमा तपाईंले फिङ्गर प्रिन्ट वा फेस आइडीका साथै बलियो पासवर्ड, पासकी, टु फ्याक्टर अथन्टिकेसनलगायतका विभिन्न सुरक्षा उपाय अपनाउन सक्नुहुन्छ ।

सम्बन्धित व्यक्तिबाहेक अर्कोसँग फिङ्गर प्रिन्ट स्क्यानिङ मिल्दैन तर भनिन्छ नि डिजिटल दुनियाँमा कुनै पनि कुरा पूर्ण रूपमा सुरक्षित छैन । अन्य सुरक्षा उपायको तुलनामा फिङ्गर प्रिन्ट सुरक्षित भए पनि पूर्ण रूपमा सुरक्षित भने छैन । गलत मनसाय भएका र प्रविधिमा पोख्त व्यक्तिले फिङ्गर प्रिन्ट क्लोनिङ वा अन्य कुनै उपायबाट तपाईंको मोबाइल डिभाइसका सूचना वा डाटा सजिलै चोर्न सक्छन् ।

## फिङ्गर प्रिन्ट सेन्सरको विकास

यो प्रविधिको पहिलो प्रयोग तोसिवाले सन् २००७ मा जी ५०० र जी ९०० मोबाइल फोनमा गरेको थियो । सन् २०१५ मा एप्पलले आइफोन–५ एसमा फिङ्गर प्रिन्ट स्क्यानर प्रयोग गरेको थियो । यस्तै सामसुङले ग्यालेक्सी एस–५ मा यस प्रविधिको प्रयोग गऱ्यो । त्यसपछि एन्ड्रोइड ६.० भर्सनका प्रायः सबै मोबाइल फोनमा फिङ्गर प्रिन्ट स्क्यानर सपोर्ट फिचर राखियो । अहिले सबैजसो स्मार्ट मोबाइल डिभाइस' मा फिङ्गर प्रिन्ट सेन्सर रहेको हुन्छ ।

## यसले काम गर्ने विधि

एप्पलले यसअघि प्रयोग गर्दै आएको फिङ्गर प्रिन्टलाई टच आइडी भनिन्थ्यो तर पछिल्लो आइफोन–१४ का कुनै पनि संस्करणमा फिङ्गर प्रिन्ट सेन्सर छैन । त्यसअघिका आइफोनको होम बटनमा फिङ्गर प्रिन्ट सेन्सर छन् । साथै अहिलेका एन्ड्रोइड स्मार्ट फोनमा फिङ्गर प्रिन्ट स्क्यानर होम बटनमै समावेश गरिएको हुन्छ । कुनै स्मार्ट फोनमा फिङ्गर प्रिन्ट स्क्यानर लाई फोनको पछाडि वा दायाँपट्टि राखिएको हामी देख्न सक्छौँ । अहिले आएका अधिकांश नयाँ स्मार्ट फोनमा फेस आइडी लकका साथै मोबाइल फोनको डिस्प्लेमै फिङ्गर प्रिन्ट समावेश गरिएको छ ।

स्मार्ट फोनले प्रयोगकर्ताको फिङ्गर प्रिन्ट (औँठा छाप) पढ्न अप्टिकल, क्यापासिटिभ,



अल्ट्रासोनिकलगायतका उन्नत प्रविधिको सहयोग लिन्छ। अप्टिकल फिङ्गर प्रिन्ट रिडरले एउटा विशेष प्रकारको क्यामरा प्रयोग गर्दछ। यसले तपाईंको फिङ्गर प्रिन्टको तस्बिरलाई कोडमा परिवर्तन गरिदिन्छ।



क्यापासिटिभ स्क्यानर प्रविधिले स्क्रिनमा कुनै फिङ्गर प्रिन्ट छ वा त्यसको तस्बिर मात्र छ भन्ने कुरा पत्ता लगाउने काम गर्दछ। त्यसैले अप्टिकल फिङ्गर प्रिन्टलाई एउटा राम्रो तस्बिरको सहयोगमा यस सेन्सरलाई सहजै झुक्याउन सकिन्छ तर क्यापासिटिभलाई यसरी सजिलै झुक्याउन सकिँदैन।

क्यापासिटिभ फिङ्गर प्रिन्ट स्क्यानरले ससाना क्यापासिटर ग्रिड प्रयोग गरी विद्युत् सञ्चय गर्दछ। आधुनिक फिङ्गर प्रिन्ट स्क्यानका लागि अल्ट्रासोनिक फिङ्गर प्रिन्ट स्क्यानरको सहयोग लिने गरिन्छ। यसको प्रयोग प्रायः मेडिकल क्षेत्रमा गरिन्छ।

अहिले फिङ्गर प्रिन्ट प्रविधि सहज र सुरक्षित मानिएको प्रविधि हो। यसले मोबाइल डिभाइसमा प्रयोगकर्ताको आकर्षण बढेको छ। पहिले महँगा मोबाइल फोनमा मात्र पाइने यस्तो सुविधा अहिले सस्ता स्मार्ट फोनमा समेत उपलब्ध छन्। सुरक्षित मानिएको फिङ्गर प्रिन्ट स्क्यानर प्रविधि आगामी दिनमा प्याटर्न लक, पिन लक र पासवर्ड जस्तै मोबाइल सेक्युरिटीको अभिन्न अङ्ग बन्ने निश्चित छ। ■

# पशुमा पनि बाँझोपन

**मानिसलाई जसरी नियमित रूपमा जाँच, औषधि उपचार, सरसफाइ आवश्यक पर्छ त्यसरी नै पशुलाई पनि ध्यान नदिने हो भने अनेकौँ रोगले सताउँछ । त्यस्तै सामान्य कुरामा ध्यान दिन नसक्दा नेपाली पशुपालक किसानले वार्षिक अर्बौं रुपियाँ बराबरको क्षति बेहोरिरहेका छन् ।**



■ केशवराज पौडेल



नेपालका किसानले धेरै क्षति बेहोर्नेमध्येको एउटा समस्या बनेको छ पशुमा हुने बाँझोपन । पशु एकपटक ब्याउँछ अनि ब्याउँदैन । जसको कारण महँगोमा किनेर ल्याइएको भैँसीलाई सस्तोमा बेच्नुपर्ने अवस्था सिर्जना भएको छ ।

बाँझोपनको समस्याले नेपाली किसानले वार्षिक अर्बौं रुपियाँको क्षति बेहोरिरहेका छन् । देशव्यापी २० प्रतिशत पशुमा बाँझोपनको समस्या देखिने गरेको छ । यो भनेको प्रत्येक सय भैँसी र गाईमध्ये २० वटामा बाँझोपनको समस्या हुनु हो ।

नेपालमा लगभग ७३ लाख गाई र ५१ लाख भैँसी छन् तर बाँझोपनको समस्या देखिँदा किसानको गोठ नै रित्तो हुने अवस्था उत्पन्न भएको छ । त्यसमा धेरैको चासो र चिन्ता हुने गरेको छैन । पशुमा बाँझोपन हुनुमा किसान आफैँ पनि दोषी छन् । पशुको ख्याल गर्दैनन् । सफाइमा ध्यान दिँदैनन् । नियमित पानी, आहारा र औषधि खुवाइँदैन ।

पशु चिकित्सकले पेटभर खान, सोतरमा सुत्न र नियमित रूपमा नाम्ले तथा जुकाको औषधि नपाउँदा पशुमा बाँझोपनको समस्या बढेको उल्लेख गर्छन् । पशुका न्यूनतम अधिकार भए पनि सामान्य






कुरामा ध्यान दिन नसक्दा किसान ठूलो आर्थिक क्षति बेहोर्न बाध्य छन् ।

पशुविज्ञ डा. लोकनाथ पौडेल यस विषयमा स्पष्ट छन्, किसानले दुःखकष्ट सहेर हुर्काएका पशुमा बाँझोपनको समस्या देखिँदा त्यसले समग्र अर्थतन्त्रलाई असर पारिरहेको छ। दूध उत्पादनमा असर परेर किसानको आर्थिक अवस्था कमजोर भइरहेको छ।

दूध उत्पादन गर्ने भैँसी मासुका लागि प्रयोग गर्दा किसानले ठूलो नोक्सानी बेहोर्नुपर्छ। शहर नजिकै रहेको ठाउँका किसानले थारो भैँसीको राम्रो मूल्य पाए पनि विकट गाउँका किसानलाई ठूलो आर्थिक क्षति भइरहेको छ।

पशु सेवा विभागका सूचना अधिकारी डा. चन्द्र ढकालको भनाइमा पोषिलो आहारमा ध्यान पुऱ्याउन सके पशुमा हुने बाँझोपनको समस्या कम हुन सक्छ।

पशुलाई टन्न खुवाएर मात्र हुँदैन शरीरमा आवश्यक पर्ने प्रोटिन, चिल्लो पदार्थ, खनिज पदार्थ, भिटामिन, कार्बोहाइड्रेट मिलाएर खुवाउनुपर्छ। यस विषयमा किसानको ध्यान जान सकेको देखिँदैन। समयमै खाना खान नपाउने र समयमै नाम्ले तथा जुकाको औषधि नदिने आम किसानको बानीले पनि बाँझोपनको समस्या बढिरहेको छ।

पशु प्राविधिक मणिप्रसाद सापकोटाका अनुसार सन्तुलित खाना र औषधि खुवाउन सके बाँझोपनको समस्या कम हुन सक्छ। पटक–पटक राँगो र गोरु खोजिरहने, गर्भ तुहिने, ब्याउन नसक्ने जस्ता समस्या पछिल्लो समयमा बढिरहेको छ।

नेपालमा अधिकांश पशुका गोठ राम्रा नभएको र कृषकले सरसफाइमा ध्यान नदिँदासमेत पशुमा सङ्क्रामक रोग लाग्ने गरेको छ। यही कारणले हरेक वर्ष भैँसी आयात बढिरहेको छ। नेपालमा बर्सेनि १३ अर्ब रुपियाँ बराबरका भैँसी आयात हुन्छन् र त्यसरी





**पशुमा गर्भाधानपछि विभिन्न कारणले भ्रूणको राम्रोसँग विकास हुन नसक्दा पशुमा गर्भ तुहिने समस्या देखिने गरेको छ ।**

ल्याइएका भैँसी अर्को पटक नब्याउँदा किसान आर्थिक मारमा पर्छन् ।

पशुले भाले खोजेको समयमै कृत्रिम गर्भधारण वा प्राकृतिक गर्भधारण गराउँदा कृत्रिममा ६५ र प्राकृतिकमा ८५ प्रतिशतसम्म गर्भ रहने सम्भावना रहन्छ । पशुमा बाँझोपन हुनुमा वंशाणुगत, वातावरणीय र विभिन्न रोगको सङ्क्रमण, पोषण तत्त्वको कमी, गोठको व्यवस्थापनमा हुने कमजोरी प्रमुख कारण हुन् । पशु सेवा विभागका अनुसार नेपालमा करिब ७४ लाख गाई र ५१ लाख भैँसीपालन गरिएको छ ।

दुधालु पशुले उचित दानापानी नपाएमा पशुको शरीरको तौल कम हुने, प्रजनन अङ्ग राम्रोसँग विकास नहुने, प्रजननका लागि आवश्यक हर्मोन पशुको शरीरमा नहुँदा पशुको प्रजनन क्षमता ह्रास आउने अनि पशुमा बाँझोपन देखिने गर्छ ।

पशु सहायक प्राविधिक राजेश लम्सालको भनाइ अनुसार हरेक २१/२५ दिनमा गाई, भैँसीको मासिक चक्र हुने गर्छ तर पशुले मासिक चक्र बाहिर नदेखाउने हुँदा कुन समयमा साँढे लगाउने भन्ने समस्या पर्दछ ।

राष्ट्रिय पशु प्रजनन कार्यालय पोखराका प्रमुख डा. जगदीश पाण्डेय भन्छन्, "आनुवांशिक गुणले गर्दा धेरै पशुमा बाँझोपनको समस्या देखा परेको छ । 'लम्पिस्किन' जस्ता महामारीका कारण पनि पशुको उत्पादन क्षमता ह्रास ल्याइरहेको छ ।"

उनका अनुसार केही पशुमा कुन समय मासिक चक्र सुरु भएको भनेर पत्ता लगाउन निकै गाह्रो हुने भएकाले पशुधनीले उपयुक्त समयमा साँढे लगाउने वा कृत्रिम गर्भाधान गर्न नसक्दा बाँझोपनको समस्या बढिरहेको छ । पोथी पशुमा वंशाणुगत र रासायनिक प्रक्रियामा फेरबदल हुँदा कोषको अधिक वृद्धि भएर पाठेघरको आकार ठूलो हुन्छ र पछि क्यान्सर समस्या पनि देखिने गरेको पाइन्छ । पाठेघरमा ट्युमर बनेपछि पोथीले प्रजननका लागि चाहिने अण्ड उत्पादन गर्न सक्दैन र सो पशुमा बाँझोपन देखा पर्छ ।

पशुमा गर्भाधानपछि विभिन्न कारणले भ्रूणको राम्रोसँग विकास हुन नसक्दा पशुमा गर्भ तुहिने समस्या देखिने गरेको छ ।

गाई, भैँसीको उत्पादनशील उमेर तीनदेखि आठ वर्ष हुने भएकाले त्यस समयमा पशुको विशेष ख्याल गर्नुपर्छ । प्रजननसँग सम्बन्धित समस्या भएमा उपचार पनि महँगो हुने र कहिलेकाहीँ उपचारले पनि काम नगर्ने हुँदा पशुलाई बथानबाटै हटाउनुपर्ने हुन्छ । ■

# नेपालका संवत्




**विक्रम संवत्को नयाँ वर्ष २०८१ साल सुरु भएको छ ।**

**लामो समयदेखि विक्रम संवत्लाई नेपाल सरकारले मान्यता दिएको र आम प्रचलनमा रहेको हुनाले यो संवत्लाई आम मानिसले चिनेका छन्, जानेका छन् तर नेपालमा लगभग २० संवत् अस्तित्वमा रहेको देखिन्छ ।**

■ निनाम लोवात्ती

नेपालका कतिपय जातजातिको आआफ्नै संवत् रहेको छ । नेपालका विभिन्न संवत्का बारेमा छोटो जानकारी :

यले दोङ/किराँत संवत्: विभिन्न संवत्मध्ये हालसम्मको पुरानो संवत् हो किराँत वा यले दोङ । कुलुङ जातिले यले दोङ भन्छन् भने अन्य किराँतीले येले दोङ, यले दोङ, यले तङबे, यले थोचे आदि भन्दछन् । जस्तै लिम्बूले यले तङ्बे, सुनुवारले यले थोचे भन्ने गरेका छन् ।

किराँतीभित्रका कुलुङ जातिको मान्यताअनुसार २०८० साल पुस १५ गते यले दोङ–५०८४ सुरु भएको छ । स्मरणीय छ कुलुङ जातिको पहिलो महिनाको नाम चाक्चाकुर हो । यो संवत् सबै किराँती जातिलगायत हायु, थामी, सुरेल, जिरेल, धिमाल आदिले पनि मान्छन् ।

सबैभन्दा पुरानो संवत्को कुरो गर्दा नेपालको सबैभन्दा पुरानो संवत् कलिगत संवत् हो भन्ने गरिन्छ ।

विक्रम संवत्: हाल नेपाल र भारतमा विक्रम संवत् प्रचलनमा रहेको छ । यो संवत् भारतको तत्कालीन उज्जैन राज्यका राजा विक्रमादित्यले चलाएको वा विक्रमादित्यको नाममा चलाइएको विश्वास गरिन्छ । यो संवत् वैशाख



महिनाबाट सुरु भई चैतमा अन्त्य हुन्छ। चन्द्रशमशेर नेपालको श्री ३ महाराज हुनुअघि नेपालमा 'नेपाल संवत्' राष्ट्रिय संवत्का रूपमा प्रचलनमा रहेको देखिन्छ। जे भए पनि चन्द्रशमशेर नेपालको श्री ३ महाराज भएदेखि राज्यद्वारा विक्रम संवत् निरन्तर प्रचलनमा रहेको छ।

बुद्ध संवत्: तत्कालीन कपिलवस्तुका राजा शुद्धोधनका छोरा युवराज सिद्धार्थ गौतमपछि गौतम बुद्ध भए। उनले राजकाज र सुखसयल त्यागेर बुद्धत्व प्राप्त गरेका थिए। त्यसैले पछि गएर उनलाई बुद्ध भनियो भने उनका चेलाले बुद्धको नाममा बुद्ध संवत् चलाए। यो संवत् हरेक जेठ पूर्णिमामा सुरु हुन्छ भने अहिले २५६७औँ वर्ष चलिरहेको छ।

नेपाल संवत्: यो संवत् भक्तपुरका महाजन शङ्खधर साख्वाले चलाएका हुन् भन्ने भनाइ छ। कथनअनुसार लिच्छवीकालमा राज ज्योतिषीले भचाकुसी (टेकु दोभान) को बालुवा सुनमा परिणत हुन्छ भनेर राजालाई सुनाएपछि राजाले भरिया पठाई टेकु दोभानको बालुवा आफ्नो दरबारमा ल्याउन अह्राएका थिए तर उक्त कुरो शङ्खधर साख्वाले पहिले नै चाल पाएकाले उनले ती भरियालाई फर्काइदिए। त्यसपछि उनले सबै गरिबलाई ऋणमुक्त गराएकाले उनको नाममा राजा राघवदेवले यो संवत् चलाएको विश्वास गरिएको छ। यो संवत् कात्तिकको 'म्ह पूजा'देखि सुरु हुन्छ। यसपालि नेपाल संवत् ११४४ भएको छ।

इस्वी संवत्: यो संवत् जिसस क्राइस्टका प्रवर्तकहरूले सुरु गरेको मानिन्छ। हाल संसारका अधिकांश देशले यस संवत्लाई राष्ट्रिय संवत्का रूपमा मान्यता दिएका छन्। हाल इस्वी संवत् २०२४ भएको छ।

बिसी : यो संवत् जिसस क्राइस्ट जन्मिनुभन्दा अगाडि प्रचलनमा थियो। यसैले 'बिफोर क्राइस्ट' अर्थात् बिसी भनियो।

अंशुवर्मा संवत्: यो संवत् अंशु वर्माले आफू महासामन्त भएपछि राजा शिवदेवको पालामा चलाएका हुन्। केही इतिहासकारका अनुसार ललितपुरको बुङमती नजिकको शिलालेखमा अंशु वर्मा संवत् २९ लेखिएको भेटिएको छ।

मानदेव संवत्: यो संवत् राजा मानदेवले चलाएका हुन्। त्यसैले यो संवत्को नाम नै मानदेव संवत् रहेको हो। यो संवत् भक्तपुरको चाँगुनारायणको मन्दिरमा राखिएको स्तम्भमा अङ्कित छ।

माथि उल्लेख गरिएबाहेक पनि नेपालमा अन्य संवत् रहेका छन्, थिए। जस्तो कि कलिगत संवत्, शक संवत्, पृथ्वी संवत्, लक्ष्मण संवत्, मिथिला संवत्, थारू, राजवंशी, तामाङ, गुरुङ, शेर्पा, मञ्जुश्री, हिजरी आदि। ■

# सङ्गीतको भूगोल





■ यमबहादुर दुरा

सङ्गीत र भूगोलबीच नङ र मासुको जस्तै घनिष्ट सम्बन्ध छ। सङ्गीत भूगोलको उपज हो र सङ्गीत भूगोलवासीका लागि। भूगोलबिना सङ्गीतको अस्तित्व नै रहन सक्दैन। सङ्गीतमा भूगोल प्रतिविम्बित हुन्छ, माटोको सुवास मगमगाउँछ र भूगोलको परिचय झल्कन्छ।

सङ्गीतको झङ्कार, गीतका भाका र शब्दमा भूगोल प्रतिविम्बित भइरहेका हुन्छन्, जसले सङ्गीत र भूगोलबीच विद्यमान घनिष्ट साइनोको साक्षी बकिरहेको हुन्छ।

अब प्रश्न तेर्सिन्छ, भूगोलमा सङ्गीत सिर्जना हुन्छ भने भूगोलशास्त्रमा सङ्गीत विषयले प्रवेश पाउनु नैसर्गिक पक्ष हो कि होइन ? यो एउटा यस्तो गहन र पेचिलो प्रश्न हो जसले एउटा कालखण्डमा भूगोलविद्हरूबीच बहस निम्त्यायो। यसका पक्ष र विषयमा तर्क-वितर्क भए। अन्ततः भूगोलशास्त्रमा सङ्गीतले स्थान पाउनुपर्छ भन्ने आवाज घनीभूत हुँदै गयो।






सन् १९६० को पूर्वार्धसम्म भूगोलशास्त्रमा सङ्गीतशास्त्रले प्रवेश पाएको देखिँदैन। त्यसपछि भने भूगोलशास्त्रले सङ्गीतलाई आत्मसात् गरेको देखिन्छ। यस क्रममा फिनल्यान्डेली भूगोलविद् जेजी ग्रानो (सन् १८८२–१९५६) ले पहिलो पटक भूगोल र सङ्गीतबीच विद्यमान साइनोबारे अध्ययन गरेको पाइन्छ।

सन् १९६० को उत्तरार्धतिर 'सङ्गीत भूगोल' सांस्कृतिक भूगोलको नवीनतम विधाका रूपमा जुर्मुराउन थाल्यो। यसबारे खोज अनुसन्धान हुन थाल्यो। 'सङ्गीत भूगोल' शोधपत्र लेख्ने क्रम सुरु भयो। सन् १९६० देखि अमेरिकामा सङ्गीतलाई सांस्कृतिक भूगोलको एउटा विशिष्ट उपविधाका रूपमा अध्ययन गर्न थालिएको देखिन्छ। 'सङ्गीत भूगोल' लाई एउटा विधाका रूपमा स्थापित गर्न अमेरिकी भूगोलविद् कार्ल साउर (सन् १८८९–१९७५) को उल्लेखनीय योगदान रहेको छ। यसैगरी जर्ज ओ. कार्नी सङ्गीत र भूगोलबीच साइनोपात जोड्ने अग्रज गुरुमध्ये एक मानिन्छन्।



समयक्रममा 'जर्नल अफ कल्चरल जियोग्राफी', 'सोसल एन्ड कल्चरल जियोग्राफी', 'जियोग्राफी', 'जर्नल अफ सोनिक स्टडिज' लगायत एक सयभन्दा बढी प्राज्ञिक जर्नलमा सङ्गीत र भूगोलबीचको नाता–सम्बन्ध केलाउन थालियो। यस्ता जर्नलमा प्रकाशित शोधमूलक लेखले 'सङ्गीत भूगोल' बारे बौद्धिक वृत्तमा चर्चा र बहस पैदा गर्न सघाए। यसबाट 'सङ्गीत भूगोल' को अवधारणाले व्यापकता पायो। 'सङ्गीत भूगोल' तुलनात्मक रूपमा नयाँ विधा हो। प्राज्ञिक अध्ययनका लागि 'सङ्गीत भूगोल' एउटा घच्चीको विषय हो।

अचेल सांस्कृतिक भूगोलका अध्येताहरूले 'सङ्गीत भूगोल' लाई पनि भूगोलको एक विधाका रूपमा अङ्गीकार गरेका छन्। यसरी भूगोलशास्त्र अन्तर्गत गरिने सङ्गीतको अध्ययनलाई 'सङ्गीत भूगोल' भनेर नामकरण गरियो। 'सङ्गीत भूगोल' अङ्ग्रेजीमा विभिन्न नामले चिनिन्छ। जस्तैः म्युजिक जियोग्राफी, जियोग्राफी अफ म्युजिक, सोनिक जियोग्राफी तथा जियोम्युजिकोलोजी।

शेली हेइजले अमेरिकाको क्यालिफोर्निया स्टेट युनिभर्सिटीमा सङ्गीत भूगोलबारे बुझाएको शोधपत्रका अनुसार 'सङ्गीत भूगोल' मा कुनै खास भूगोलमा सङ्गीतको उत्पत्ति र विकासबारे अध्ययन गरिन्छ। हेइजको बुझाइमा 'सङ्गीत भूगोल' अन्तर्गत एउटा भूगोलमा उत्पत्ति भएको सङ्गीत अर्को भूगोलमा कसरी विस्तार भयो भन्नबारे पनि अध्ययन गर्न सकिन्छ। यसमा सङ्गीतको उत्पादन र उपयोग कसरी हुन्छ भन्नेबारे अध्ययन गरिन्छ। 'सङ्गीत भूगोल' मा कुनै गीतको सांस्कृतिक तथा सामाजिक अर्थ के हो भन्नेबारे पनि विश्लेषण गरिन्छ ।

सुन्दा सामान्य जस्तो लागे पनि 'सङ्गीत भूगोल' बहुआयामिक र जटिल विषय हो। यसभित्र अनेकन् विधा समेटिन सक्छन्। सन् २०१० मा 'काइमेरा' जर्नलमा प्रकाशित एक शोधपत्रमा 'सङ्गीत भूगोल' मा समाविष्ट तत्त्वहरूको सूची पेस गरिएको छ। शोधपत्रमा जर्ज ओ. कार्नीलाई उद्धृत गर्दै भनिएको छ, 'सङ्गीत भूगोल' मा गीतका शैली, संरचना, शब्द, व्यक्ति, स्थान, सञ्चार माध्यम, जातीयता, वाद्ययन्त्र तथा सङ्गीत उद्योग जोडिन आइपुग्छन्।

यति मात्र नभएर 'सङ्गीत भूगोल' मा सामाजिक, राजनीतिक तथा आर्थिक पक्षमा पनि जोडिन पुग्छ। यससँगै सङ्गीतको राजनीतिक अर्थशास्त्र तथा समाजको साङ्गीतिक सौन्दर्यचेत,

भूगोल, संस्कृति, सङ्गीतशास्त्र (म्युजिकोलोजी), क्षेत्रीयता/आञ्चलिकता, इतिहासजस्ता तमाम विषय जोडिन आइपुग्छन् । यसबाट 'सङ्गीत भूगोल' एउटा जटिल विषय प्रतीत हुन पुग्छ । कतिपय अवस्थामा 'सङ्गीत भूगोल' को भावभूमि, व्याकरण र दायरालाई सरल भाषामा बुझाउन कठिन पर्छ ।

## नेपालको सांस्कृतिक भूगोलमा फक्रिएको सङ्गीत भूगोल

नेपालको सीमाभित्र हिमालदेखि तराईसम्म अनि पूर्वदेखि पश्चिमसम्मका भूगोलमा 'सङ्गीत भूगोल' का अनेकन् तत्त्व भेटिन्छन् । जसबारे 'सङ्गीत भूगोल' कोणबाट अध्ययन नभए पनि लोकभाका र लोकसंस्कृतिका कोणबाट धेरथोर अध्ययन भएका छन् । नेपालको 'सङ्गीत भूगोल' को आयाम देशको राजनीतिक भूगोलभन्दा पर रहेको सिक्किम, दार्जिलिङ, सिलङ, भुटानसम्म विस्तार भएको देखिन्छ ।

'सङ्गीत भूगोल' को अध्ययनमा लोकसाहित्य तथा लोकगीतका अध्येताहरूले आफ्नै किसिमले गुनिलो योगदान दिएका छन् । यद्यपि यस्ता अध्ययनमा नेपालका अध्येताले 'सङ्गीत भूगोल' को पाइन भने चढाइएको पाइँदैन । जनकवि केशरी धर्मराज थापा, कालीभक्त पन्त, पूर्णप्रकाश नेपाल 'यात्री', कृष्णप्रसाद पराजुली, सत्यमोहन जोशी, डा. जयराज पन्तजस्ता लोकसंस्कृतिका अध्येताको कृतिमा 'सङ्गीत भूगोल' का तत्त्व पर्याप्त भेटिन्छन् ।

नेपालमा 'सङ्गीत भूगोल' लाई सोही नामबाट नपुकारिकनै 'सङ्गीत भूगोल' को अध्ययन भएको देखिन्छ । नेपालको भूगोलमा प्रचलित सङ्गीत (खासगरी लोकसङ्गीत) को अध्ययन भएका छन् । नेपालमा स्थानीयस्तरमा प्रचलित गीत/सङ्गीतलाई 'सङ्गीत भूगोल' को दर्पणबाट हेर्ने र सोही आधारमा सैद्धान्तीकरण नगरिएको भए पनि प्रकारान्तरले 'सङ्गीत भूगोल' को अध्ययन गरिएको भेटिन्छ ।

हाम्रो सरहदमा अनेकन् शैलीका लोकसङ्गीत प्रचलित छन् । त्यसलाई 'सङ्गीत भूगोल' को कोणबाट अध्ययन गर्न सकिन्छ । लोकसङ्गीतका अध्येता रामशरण दर्नालले आफ्नो कृति 'गायनशैली' मा नेपालको पूर्वी भागको सांस्कृतिक धरोहरका रूपमा रहेका पालम, सङ्गिनी, हाक्पारे, च्याब्रुङ, धान नाच आदिको चर्चा गर्नुका साथै साबिकको पश्चिमाञ्चल क्षेत्रमा प्रचलित सालैजु, यानीमाया, सुनीमाया, ठाडो भाका, तेर्सो भाका, कौरा, नानीरलै, मारुनी, ख्याली, झ्याउरे आदि तथा मध्यपश्चिमाञ्चलको टप्पालगायतका सङ्गीत शैलीको पनि चर्चा गरेका छन् । यी लोकभाका र तिनमा अन्तरनिहित सङ्गीतमा 'सङ्गीत भूगोल' का तत्त्व प्रचुर मात्रामा भेटिन्छन् ।

कतिपय अध्येताले स्थानीय भूगोलमा प्रचलित लोकभाकालाई अझ सूक्ष्म किमिसले अध्ययन गरेको पाइन्छ । लोकसाहित्यका हस्ती सत्यमोहन जोशीले लमजुङ, तनहुँ तथा कास्कीका गामबेँसी, देउराली तथा भन्ज्याङहरू डुलेर तत् ठाउँका साङ्गीतिक विरासतका रूपमा रहेका झ्याउरे, ठाडो भाका, सोरठी, चुड्काजस्ता लोकभाकालाई लिपिबद्ध गरी २०१३ सालमा 'हाम्रो लोकसंस्कृति' नामक कृति प्रकाशनमा ल्याएका थिए । जनसाधारणका हाँसो–आँसु र जीवनको घामछाया प्रतिविम्बित त्यस पुस्तकले २०१४ सालमा मदन पुरस्कार हात पाऱ्यो । पुस्तकमा 'सङ्गीत भूगोल' उच्चारणै नगरी स्थानीय 'सङ्गीत भूगोल' को मीठो झलक पाइन्छ ।



यसैगरी सत्यमोहन जोशी, प्रदीप रिमाल, विहारीकृष्ण श्रेष्ठ, चूडामणि बन्धुलगायतका अध्येताको टोलीले कर्णालीको स्थलगत भ्रमण गरी त्यहाँको लोकसंस्कृतिबारे युगान्तकारी अध्ययन गऱ्यो । २०२८ सालमा तयार पारिएको त्यस अनुसन्धानात्मक कृतिको नाम थियो 'कर्णाली लोक संस्कृति' । त्यसमा कर्णालीको 'सङ्गीत भूगोल' प्रतिविम्बित छ । त्यस कृतिको चौथो खण्डमा चूडामणि बन्धुले कर्णालीमा प्रचलित लोकभाकाहरूको नालीबेली प्रस्तुत गरेका छन् । नेपाली समाजलाई उल्लेखनीय गुन लाएबापत 'कर्णाली लोकसंस्कृति' ले २०२८ सालमा मदन पुरस्कार प्राप्त गरेको थियो ।

नेपाली लोकगीतका अध्येता कालीभक्त पन्तले नेपालको भूगोलमा प्रचलित अनेकन् लोकभाकाको अध्ययन र विश्लेषण गरेका छन् । उनले पनि 'हाम्रो सांस्कृतिक इतिहास' (२०२८) मा नेपाली मौलिक लोकभाकाहरूप्रति गहिरो अनुराग प्रदर्शन गर्दै रोइला,

तीजको गीत, रत्यौली, भूओ गीत, धान नाच, खाँडो, ओहाली गीत, महाल गीत एवं तत्कालीन समयका चर्चित कलाकार आदिबारे रोचक विवरण पस्केको हामी पढ्न सक्छौँ । उनले आफ्नो कृतिमा राजनीतिक भूगोलका दृष्टिले टाढिएका तर सांस्कृतिक भूगोलका हिसाबले नजिकिएका सिक्किम, दार्जिलिङ तथा भुटानमा प्रचलित नेपाली लोकभाकाको विवरण पेश गरेका छन् ।

लोकसाहित्यका अध्येता डा. जयराज पन्तले 'डोटेली धमारी गीत : एक अध्ययन' (२०६४) मा डोटीमा प्रचलित धमारी गीतको सूक्ष्मतम विश्लेषण गरेका छन् । पन्तले आफ्नो अर्को कृति 'मष्टापरम्परा र त्यसका गीतहरू' (२०६४) मा डोटीमै प्रचलित मष्टा (मष्टो) परम्परागतसँग सम्बन्धित गीतमाथि अध्ययन गरेको देखिन्छ । उनका कृतिमा स्थानीय 'सङ्गीत भूगोल' राम्रैसँग सगबगाएको छ ।

साहित्यकार कृष्णप्रसाद पराजुलीले जीवनकालभरि नेपालका लोकभाकाप्रति गहिरो स्नेहभाव प्रकट गरिरहे । पराजुलीले 'नेपाली लोकगीतको आलोक' नामक कृतिमा नेपालको भूगोलमा फक्रिएका लोकगीतका थुँगाहरू सजाएका छन् । उनीद्वारा कर्णाली, भेरी, गण्डकी, बागमती, कोशी र मेचीजस्ता नदी प्रवाह प्रणालीसँगै गुञ्जिएका लोकभाकाको मृदुशैलीमा नालीबेली केलाइएको छ ।

उनले भारतमा रहेका नेपालीभाषी समुदायमा प्रचलित लोकगीतको पनि बेलिविस्तार लगाएका छन् । कृष्णप्रसाद पराजुलीले नेवार, तामाङ, राई, लिम्बू तथा शेर्पा समुदायमा प्रचलित लोकगीतबारे सुन्दर विवरण पेश गर्नुका साथै मैथिली तथा भोजपुरी गीतबारे पनि चर्चा गरेको देखिन्छ । उनका प्रस्तुतिमा पनि परोक्ष किसिमले 'सङ्गीत भूगोल' प्रतिविम्बित भएको छ ।

हाम्रा लोककण्ठले पनि 'सङ्गीत भूगोल' बोल्दै आएको छ । सिद्धार्थ राजमार्गस्थित राम्दी पुल लोककण्ठमा उच्चारण भइरहने स्थाननाम हो । स्याङ्जा र पाल्पा जिल्लालाई जोड्ने राम्दी पुल लोककण्ठमा एउटा लोकगीत निकै प्रचलित छ : 'राम्दी पुल तरने बित्तिकै, बाँचे भेट मरे त यत्तिकै ।'

त्यही राम्दी पुल तरेर गण्डकी र धौलागिरिका लाहुरे साबिकको बटौली झर्थे । त्यसपछि सुनौली हुँदै पल्टनमा हाजिर हुन जान्थे । प्रस्तुत गीतले घरपरिवार र साथीसङ्गीसँग बिछोडिए लडाइँमा होमिन अभिशप्त लाहुरेको मनोविज्ञान बोल्छ । यस लोकगीतले गोर्खा भर्ती केन्द्रको पीडादायी विरासत र गण्डकी–धौलागिरि भेगको 'सङ्गीत भूगोल' पनि बोलिरहेको छ ।

## सङ्गीत भूगोल रच्ने एउटा विशिष्ट पात्र

जीवनको उर्वर कालखण्ड देश भ्रमण गरी लोकभाका र लोकजीवनको अभिलेखन गर्नमा व्यतीत गरेका जनकवि केशरी धर्मराज थापाको नाम नेपालको 'सङ्गीत भूगोल' मा योगदान दिने पात्रका रूपमा स्वर्ण अक्षरले लेखिएको छ । उनलाई नेपालको लोकसंस्कृति, लोकभाका तथा 'सङ्गीत भूगोल' को अन्वेषण गर्ने विशिष्ट व्यक्तित्व मान्न सकिन्छ ।

यद्यपि उनका कृतिमा कहीँ पनि 'सङ्गीत भूगोल' शब्दावली परेको छैन । तैपनि उनी देशका कुना–कन्दरा तथा दार्जिलिङ, देहरादुनजस्ता नेपालीभाषीको बसोबास रहेको तर देशको राजनीतिक भूगोलबाहिरका भूभागको भ्रमण गरी लोकभाकाबारे जानकारी सङ्कलन तथा अभिलेखीकरण गर्ने कार्यमा दिलो ज्यान दिएर सरिक भए ।

**नेपाली लोकगीतका अध्येता कालीभक्त पन्तले नेपालको भूगोलमा प्रचलित अनेकन् लोकभाकाको अध्ययन र विश्लेषण गरेका छन् । उनले पनि 'हाम्रो सांस्कृतिक इतिहास' (२०२८) मा नेपाली मौलिक लोकभाकाहरूप्रति गहिरो अनुराग प्रदर्शन गर्दै रोइला, तीजको गीत, रत्यौली, भूओ गीत, धान नाच, खाँडो, ओहाली गीत, महाल गीत एवं तत्कालीन समयका चर्चित कलाकार आदिबारे रोचक विवरण पस्केको हामी पढ्न सक्छौँ ।**

पैदलयात्रा गरी देशको अप्ठ्यारो भूगोललाई छिचोल्ने आँट र धैर्य भएका धर्मराज थापाले स्थलगत यात्राका आधारमा 'मेरो नेपाल भ्रमण' (२०१६), 'हाम्रो लोकगीत' (२०२०), 'गण्डकीका सुसेली' (२०३०), सगरमाथाको सेरोफेरो (२०३१), 'लोकसंस्कृतिको घेरामा लमजुङ' (२०४१), 'चितवन दर्पण' (२०५०), 'तनहुँ फूलबारी' (२०५८) जस्ता देशको भूगोल, लोकभाका र लोकजीवन बोल्ने कृति प्रकाशनमा ल्याए ।

हाल उनका कतिपय कृति अप्राप्य भइसकेका छन् । 'गण्डकीका सुसेली' (२०३०) मा गण्डकी भेग र त्यस वरिपरिको भूगोलमा प्रचलित लोकभाकाहरूको सूक्ष्मतम नालीबेली केलाएका छन् । कृतिमा बालुन, घाँटु, सोरठी, चुड्का, यानीमाया, सुनीमाया, भजन, सालैजो, झ्याउरे, आँधीखोले रोइलाजस्ता यावत् लोकभाका सविस्तार



चर्चा गरिएको छ । थापाको अर्को कृति 'लोकसंस्कृतिको घेरामा लमजुङ' मा लमजुङका भिरपहरा, लेकबेँसी तथा गाउँबस्तीको लोकजीवन र लोकभाकाको रसिलो–भरिलो वर्णन छ ।

थापाको अर्को कृति 'चितवन दर्पण' मा चितवनको भूगोलमा उब्जिएका लोकभाका र लोकजीवनको सजीव चित्र देखिन्छ । यस कृतिमा थापाले सुखको खोजीमा पहाड छाडेर चितवन बसाइँ सर्ने ग्रामीणजनको कण्ठमा गुञ्जिएको सङ्गीतमय भावनालाई यसरी दर्साएका छन् ः

"अब त झरियो चितौन, हाँसीखेली जिन्दगी बिताउन' भन्दै लोकगीतको चरन उचालेर डोका डाला बोकी गोरु खेद्दै चितवन झरेकाहरूले गाएको लोकगीत गरिबी बोकेको जिन्दगीलाई उनीहरूको भित्री मनको भावनाले कति वसन्तको कोइली जस्तो कुर्रकुर्र पारेको छ" (थापा, २०५०, पृ. झ) ।

लोकजीवन, लोककण्ठ र स्थानीय भूगोललाई केन्द्रमा राखेर धर्मराज थापाका कृतिमा नजर लाउँदा निःसन्देह भन्न सकिन्छ, उनका कृतिमा 'सङ्गीत भूगोल' जुर्मुराएको छ । थलोमै पुगेर जानकारी सङ्कलन गरिएको उनका कृतिमा लोकभाका र स्थानीय जीवनशैलीको जीवन्त बखान भेटिन्छ । थापाका कृति अमूल्य छन् । जसमा नेपाली लोकसङ्गीत र भूगोलबीच घनिष्ट नाता–सम्बन्ध भेटिन्छ । 'सङ्गीत भूगोल' को नामै नलिइकन 'सङ्गीत भूगोल' को अध्ययन गर्ने धर्मराज थापाको योगदान वन्दनीय छ ।




## स्थाननाम

स्थाननाम आफैँमा भूगोलको पर्याय हो । जसले स्थानीय भूगोलको परिचय दिन्छ । हाम्रा लोकभाकामा स्थाननाम जनाउने अभिव्यक्तिको कुनै अभाव छैन । लोकभाकामा नेपाली गाउँबस्तीको परिचय झल्कने अनगन्ती अभिव्यक्ति भेटिन्छन् । लोकहृदयमा न्यायो बास पाएका गायक लोकबहादुर क्षेत्रीदेखि अनुज पुस्ताका स्वरजीवी विवेक धितालसम्मले स्थाननामलाई आधार बनाएर गीत गुञ्जाएका छन् । यस्ता अभिव्यक्तिमा स्थानीयस्तरमा मात्रै परिचित स्थाननामदेखि राष्ट्रियस्तरमै चर्चित भूगोल पनि पर्छन् ।

स्थाननाम झल्कने लोकगीत लोककण्ठमा प्रशस्त भेटिन्छन् । जस्तैः 'दिक्तेल बजार, सम्झनामा आउँछौ हजार', 'माया तिम्लाई सम्झँदाखेरि आँखा भेरी मन हुन्छ कर्णाली', 'माछापुच्छ्रे भन्नु मात्रै धौलागिरि अल्को,





आज भेट्नु रैछ, हिजै लाग्यो झल्को', "ढाकाटोपी मायाले दिएको, कुन्छा जाने बाटैमा लिएको', 'दुराडाँडे मायाको डफ्फा, दिन्छु माया पछ्यौरी छेउ थाप', 'घर त मेरो याँ होइन लमजुङ, छोडी जाने मायालाई के सम्झुम्', 'भोलि घामको झुल्कोमा, तिमी हामी मिलेर लाउँला माया बन्दीपुरैमा', 'काँचो कटर, मै जान्छु राङखोला रोक मटर', 'बेनीको बजार, जता माया उतै छ नजर', 'यो दुःखीलाई सम्झँदै गरे है, फुर्सद भए हात्तीखोर झरे है', 'धनकुटाको डाँडैडाँडा चल्यो हुलाकी, सासूलाई चाबी सालोलाई जाबी सालीमाज्यूलाई झुम्के बुलाकी' आदि ।

लोकभाकामा अभिव्यक्त यस्ता स्थाननामले स्थानीय भूगोल र संस्कृतिको मीठो परिचय दिन्छन् । जसले भूगोलको अध्ययनमा पनि धेरथोर योगदान गर्छ । यस्ता अभिव्यक्तिमा 'सङ्गीत भूगोल' का तत्त्वहरू यत्रतत्र भेटिन्छन् ।

## अबको बाटो

हामी उभिएको भूगोलको साङ्गीतिक पक्षलाई 'सङ्गीत भूगोल' नभनेरै 'सङ्गीत भूगोल' का रूपमा अध्ययन भएको सम्बन्धमा अगाडि नै चर्चा भइसकेको छ । अब त्यस्ता कृतिलाई 'सङ्गीत भूगोल' को कोणमा थप अध्ययन र विश्लेषण गर्न सकिने ठाउँ छ । हाम्रो लोकसङ्गीतसँग जोडिएका अवयवलाई 'सङ्गीत भूगोल' आधारभूत सिद्धान्त र व्याकरणसँग तादात्म्य मिलाएर सैद्धान्तीकरण गर्न आवश्यक छ । यसका लागि थप अध्ययन तथा विश्लेषण गरिनु पर्छ ।

नेपाल गीत/सङ्गीतलाई 'सङ्गीत भूगोल' को नजरबाट हेर्ने हो भने नेपालको सांस्कृतिक भूगोलका नयाँ पाटा उजागर हुन सक्छन् । आँधीखोले भाका, पुर्बेली भाका, हाक्पारे, तामाङ सेलो, देउडा, ठाडो भाका, हुड्केलगायत सबै साङ्गीतिक परम्पराले 'सङ्गीत भूगोल' सुसेल्ने गर्छन् । यसको अर्थ हो रैथाने सङ्गीतमा नेपालको 'सङ्गीत भूगोल' का अवयवहरू भेटिन्छन् ।

हाम्रो 'सङ्गीत भूगोल' मा इतिहास, सामाजिक मनोविज्ञान, संस्कृति र जीवनशैलीका पाटा उघ्रिन्छन् । भूगोल र लोकगीतको साइनोपात केलाउँदा अरू अनगन्ती विषयवस्तु सँगसँगै आइपुग्छन्, एउटा बरेलो टिप्न खोज्दा बरेलोको सिङ्गो झ्याल नै तानिएजस्तो गरी । अर्को शब्दमा भन्ने हो भने 'सङ्गीत भूगोल' को प्रवाहमा लहरिँदा लहरिँदै अन्य विषय पनि यस्तरी जोडिन आइपुग्छन् कि मर्स्याङ्दीमा उसका सहायक नदी हतारिँदै मिसिन आएजस्तो गरी ।

हामीसँग 'सङ्गीत भूगोल' अध्ययनका अरू पनि अथाह विषयवस्तु छन् । मेची, कोशी, गण्डकी, कर्णाली, भेरीजस्ता नदी प्रवाह प्रणालीसँग सम्बन्धित 'सङ्गीत भूगोल'लाई बेग्लै कोणबाट अध्ययन गर्न सकिन्छ । हिमाल, पहाड तथा तराईका अनेकन् भूखण्डमा अस्ताउँदो लोकभाकालाई 'सङ्गीत भूगोल' को धारबाट अध्ययन गर्न सकिने छ ।

यसैगरी हामीकहाँ आञ्चलिकता छचल्कने मृदु लोकभाकाहरू छन् । तिनको बेग्लै अध्ययन गर्न सकिन्छ । हाम्रा जातजातिमा प्रचलित अनेकौँ लोकभाकालाई 'सङ्गीत भूगोल' तथा जनजातीय सङ्गीत (इथ्नोम्युजिकोलोजी) को कोणबाट अध्ययन गर्न सकिन्छ ।

हाम्रो नाभी गाडिएको भूगोलमा 'सङ्गीत भूगोल' का अनेकन् आयामलाई ओल्टाइपल्टाइ गरी सूक्ष्मतम अध्ययन गर्न सकिन्छ । यस प्रकारको अध्ययनबाट नेपाली समाजको इन्द्रधनुषी रङले एउटा सुन्दर संसार निर्माण गरेको अनुभूति मिल्ने छ । ■



# सम्भव छ विगत हेर्न

**बितेको समयमा सम्पन्न भइसकेका घटनालाई पनि तस्बिर र भिडियोका रूपमा खिच्न सकिने कुरा वैज्ञानिक जगत्मा सनसनीपूर्ण उपलब्धिका रूपमा आएको छ । सम्भवतः यो उपलब्धि आम मानिसका लागि चाँडै अचम्मको सफलताका रूपमा स्थापित हुन के बेर ।**



■ लेखनाथ ढकाल

हरेक घटना प्रकाशको गतिसँगै अन्तरिक्षमा प्रसारण भएका हुन्छन् । तारामण्डल तथा शक्तिशाली गुरुत्व केन्द्रमा ठक्कर खाँदै ब्रह्माण्डको व्यापक क्षेत्रमा रुमल्लिरहेका होलान् लाखौं वर्षपहिलेका घटनाका तरङ्ग । ठूलो 'रिफ्लाक्टिङ मिरर', शक्तिशाली 'कन्जरभिङ लेन्स' र शक्तिशाली 'एम्प्लिफाइङ' संयन्त्रको मद्दतबाट ती घटनालाई हाम्रो आँखाले दृश्यावलोकन गर्न सक्ने बनाउनु ठूलो कुरा होला र ! हाम्रो हजारौं वर्षपहिलेका पुर्खाले घुँयत्रो हानेर मृगलाई ठहरै पारी समूहमा सबै



**अमेरिका, क्यानडा र युरोपेली देशहरू सम्मिलित यस अन्तरिक्ष परियोजनामा विश्वभरका वैज्ञानिक तथा इन्जिनियरको लामो र कठोर मेहनत रहेको छ । सन् २०२१ मा नासाले 'जेम्स वेब स्पेस टेलिस्कोप' सफलतापूर्वक अन्तरिक्षमा पठायो ।**

नाङ्गै झुम्मिएर लुछ्दै खाएको दृश्य हेर्न पाइने आशा वैज्ञानिक परिकल्पनाले पलाएको छ ।

सूर्य उदाएको वा अस्ताएको तस्बिर खिच्दा त्यो दृश्य झन्डै साढे आठ मिनेट अगाडिको हुन्छ । तस्बिर हेर्दासम्म सूर्य साढे आठ मिनेट पहिलै अस्ताइसकेको हुन्छ । किनकि सूर्यबाट प्रकाश हाम्रो क्यामराको लेन्समा आइपुग्न आठ मिनेट १६ सेकेन्ड लाग्छ । यस्तै कतिपय ताराको तस्बिर खिचिएको बेलासम्म त्यो तारा वर्षौंपहिले मरिसकेको पनि हुन सक्छ । किनकि त्यो ताराबाट प्रकाश हामीकहाँ आइपुग्न लाखौं वर्ष लागेको हुन्छ ।

यसैगरी सुदूर अन्तरिक्षबाट आज पृथ्वीको भिडियो खिचियो भने त्यो दृश्य महाभारतको लडाइँ भइरहेको बेलाको पो हुने हो कि ! धन्य छ अन्तरिक्ष अन्वेषण र अनुसन्धान कार्यमा मेहनत गरिरहेका वैज्ञानिकलाई । हजुरबाको बिहेमा लस्करै जन्तीसँग बसेर हजुरबा र हजुरआमाले भतेर खाइरहेको भिडियो मोबाइल फोनमा हेर्न पाइने रहर तपाईंमा जागेको होला । वैज्ञानिकहरूको परिकल्पना साकार होस् र आम मानिसले उपयोग गर्न सकिने प्रविधिका रूपमा छिट्टै विकास होस् ।

साहित्यमा कल्पनाशील स्रष्टाले अगाडि प्रवाह भइरहेको समय पडाडि पनि फर्किएका घटनाको तिलस्मीपूर्ण विम्बहरू परिकल्पना गरे, कथा लेखे । कतिपय यस्तो परिकल्पनामा आधारित कथाका चलचित्र पनि बनाइएका छन् । समयको प्रवाह अगाडि, पछाडि हुने काल्पनिक घटनालाई 'टाइम मेसिन' भनिन्छ । यो काल्पनिक 'टाइम मेसिन' को काल्पनिक घटना प्रकृतिको यथार्थ नै त होइन भन्ने प्रश्न खडा भएको पो हो कि भन्ने कुरा वैज्ञानिकका प्रयोगले उब्जाएको छ ।

नेसनल एरोनटिक्स एन्ड स्पेस एडमिनिस्ट्रेसन (नासा)ले अन्तरिक्ष अनुसन्धान परियोजनाका लागि बनाएको पछिल्लो अत्याधुनिक उपकरणले मानिसको यस कल्पनालाई यथार्थमा परिणत गर्न सकिने नतिजाको झलक दिएको छ । प्राचीन इतिहासका घटनालाई दूर अन्तरिक्षबाट तस्बिर र भिडियो खिच्न अन्तरिक्ष अनुसन्धान केन्द्रमा जडान गरिएका उपकरण सफल भएका पनि छन् । के थाहा यो परियोजनाको सफलताले हजुरबा र हजुरआमा आफ्नो बिहेमा जन्तीको ताँतीसँगै लस्करै भतेर खान बसेको दृश्य हेर्न सकिने दिन हाम्रै पालामा आउँला कि ।

महाभारतको लडाइँ, रामायणमा वानरका सेनाको बथान, गौतमबुद्धले ध्यान गरिरहेको, जिसस कालका घटना आदिको सचित्र बेलिविस्तार सजीव हेर्न सकिने कुरा यथार्थमै परिणत नहोला भन्ने छैन । १६ सय गोपिनीसँग वृन्द्रावनमा श्रीकृष्णले मुरली बजाएर नाचेको सजीव श्रव्य–दृश्य आफ्नै मोबाइल फोनमा हेर्न पाइने आशा हामी अब गर्न सक्छौं । गिजाको पिरामिड र चीनको पर्खाल बनाएको दृश्य सजीव हेर्न पाउने भएमा इतिहासका सबै रहस्य खुल्ने छन् । कतिपय रहस्य तथा किंवदन्तीको वास्तविकता उजागर हुने छ ।

अमेरिका, क्यानडा र युरोपेली देशहरू सम्मिलित यस अन्तरिक्ष परियोजनामा विश्वभरका वैज्ञानिक तथा इन्जिनियरको लामो र कठोर मेहनत रहेको छ । सन् २०२१ मा नासाले 'जेम्स वेब स्पेस टेलिस्कोप' सफलतापूर्वक अन्तरिक्षमा पठायो । यो परियोजना अन्तरिक्ष अन्वेषणमा आजसम्मको सबैभन्दा उच्च ज्ञान, प्रविधि र कौशलताको नमुना बनेको छ । यस परियोजनाले ब्रह्माण्डको उत्पत्ति, अन्तरिक्ष अन्वेषण, प्रकृतिको ज्ञान र समयको बोध गर्ने कुरामा क्रान्ति ल्याएको छ ।

नासाका पूर्वनिर्देशक अन्तरिक्ष वैज्ञानिक जेम्स वेबको नामबाट यो परियोजनाको नामकरण गरिएको हो । यसले





पृथ्वीबाट १५ लाख किलोमिटर टाढा अन्तरिक्षमा रहेर काम गर्दै छ। यस अनुसन्धान केन्द्रको परियोजनालाई सन् १९९० देखि अन्तरिक्षमा रहेर काम गरिरहेको हबल टेलिस्कोपको निरन्तरता एवं विकसित रूप भनिएको छ तर जेम्स वेब टेलिस्कोपको निर्माण र प्रक्षेपणको सिद्धान्त, प्रविधि र यसमा प्रयोग गरिएका उपकरणको रचनामा इन्जिनियरहरूले प्रदर्शन गरेको उच्च कौशलता सबैलाई चकित पार्ने खालको छ।

२१ फिट व्यास भएको ठूलो 'रिफ्लेक्टिङ मिरर', जसलाई सयौँ टुक्रा साना क्याप्सुलमा राखेर दूर अन्तरिक्षमा पुऱ्याउनु अनि 'आर्टिफिसियल इन्टेलिजेन्स'को उपयोग गरेर पूर्ण आकारमा 'इन्फ्रारेड' तरङ्गहरूलाई एकीकृत गर्ने अवस्थामा राख्नु चानचुने कुरा होइन। सामान्यतः सुन्दा असम्भव लाग्ने काम कुशल इन्जिनियरहरूले उपयोगी हुने गरी तयार पारेर देखाएका छन्।

धेरै टाढाबाट आउने मन्द 'इन्फ्रारेड' तरङ्गलाई त्यो ठूलो 'रिफ्लेक्टिङ मिरर' ले एकीकृत गरी अस्तित्व नै हराउन लागेको तारा मात्र होइन अन्तरिक्षको कुनै सानो कणको समेत तस्बिर खिचेर पठाउन सफल भएको छ। अझ अचम्मको कुरा त यसले अनुमानित ७० करोड वर्षपहिलेको पृथ्वीको तस्बिर खिचेर पठाएको छ। यसबाट काल्पनिक साहित्यमा प्रयोग गरिएको 'टाइम मेसिन' जस्तै जेम्स वेब टेलिस्कोपलाई लिने गरिएको छ।

पृथ्वी, सौर्यमण्डल, तारा र सम्पूर्ण ब्रह्माण्डका विषयमा जानकारी गर्ने चाहना मानिसको आधारभूत चरित्र हो। मानिस जिज्ञासु हुन्छ। हरेक घटनाका बारेमा जानकारी लिन चाहन्छ। जीवको उत्पत्ति, ब्रह्माण्डको उत्पत्ति, अन्तरिक्षका घटनासम्बन्धी वैज्ञानिकले निरन्तर एकपछि अर्को उपलब्धि हासिल गरिहेका पनि छन्। ▪



ट्रोजन युद्धका बेला आक्रमणमा परेको कांस्यकालको पौराणिक शहरका नामले चिनिन्छ ट्रोय। जसको वर्णन प्राचीन ग्रीसका पौराणिक कथामा छ।

ट्रोय शहर काल्पनिक नगरी थियो या वास्तविक शहर भन्नेमा पुरातत्त्वविद्हरूमा मतभिन्नता थियो तर पछिल्ला पुरातात्त्विक अध्ययनले ट्रोय काल्पनिक नगरी नभई वास्तविक शहर रहेको पुष्टि गरेको छ। पुरातात्त्विक अध्ययनले ट्रोयलाई वर्तमान टर्कीको उत्तर–पश्चिममा अवस्थित ऐतिहासिक नगरीका रूपमा प्रमाणित गरेको छ।

पुरातात्त्विक उत्खननले होमरको इलियड शहर नै (ट्रोय) भएको तथ्य विश्वव्यापी रूपमा स्वीकारिएको छ। ट्रोय शहरलाई स्थान अनुसार फरक नामले बुझिन्थ्यो। ट्रोयलाई टर्कीमा

हिसार्लिक, होमरमा इलियोस, ग्रीसमा इलिओन र रोमनमा इलियम भनिथ्यो। पछिल्लोपटक ट्रोयको पुरातात्त्विक स्थललाई युनेस्कोले विश्व सम्पदा सूचीमा सूचीकृत गरेको छ।

## मिथकदेखि यथार्थ

ग्रीसका प्रसिद्ध कवि होमरले आठौँ शताब्दीमा लेखेको आफ्नो महाकाव्यमा 'ट्रोजन द इलियर एन्ड द ओडिसी' मा ट्रोजन तथा उनको शहर ट्रोयलाई लोकप्रिय किसिमले प्रस्तुत गरेका छन्। कवि होमरको महाकाव्यमा १३ औँ शताब्दी इसापूर्वमा ट्रोजन युद्धको अन्तिम वर्षका बारेमा वर्णन छ।

ग्रीस र ट्रोयबीचको १० वर्षे उक्त युद्धमा राजा पिय्रम र अगामेमोन तथा अन्य वीर योद्धा हेक्टर, अकिलिस आदिको बहादुरीको गाथा छ। १९ औँ शताब्दीसम्म पनि काल्पनिक लाग्ने ट्रोय शहरको कथा पछि वास्तविकतामा परिणत भयो। १९ औँ शताब्दीको अन्त्यतिर जर्मनीका पुरातात्त्वविद् हेनरिक शिलम्यानको खोज र अध्ययनले उक्त तथ्य बाहिर ल्याएको थियो। शिलम्यान टर्कीमा रहँदा उनले खोजका क्रममा विस्थापित प्राचीन मानव बस्तीको ढिस्को खोतले। हिसार्लिक भनेर चिनिने उक्त भग्नावशेष बारे सीमित विशेषज्ञहरू मात्र जानकार थिए। माटोले पुरिएर खण्डहरमा परिणत उक्त प्राचीन शहरको भग्नावशेष फेला पार्ने कल्पना गरेका शिलम्यानले नभन्दै खन्दै जाँदा त्यहाँ प्राचीन नगरीको भग्नावशेष फेला पर्‍यो। पछि थाहा लाग्यो उक्त भग्नावशेष त प्राचीन ट्रोय शहरको रहेछ।

शिलम्यानको खोजअघि ट्रोय केवल प्रसिद्ध कवि होमरको महाकाव्यको काल्पनिक नगरी मात्र थियो। ग्रीस र ट्रोयबीच भएको युद्धको कथा उनले आफ्नो काव्यमा प्रस्तुत गरेका छन्। त्यो महाकाव्य राजा पिय्रम र अगामेमोन तथा वीर योद्धाहरू हेक्टर, अकिलिस जस्ता पात्रहरूको



युद्धगाथाले भरिपूर्ण छ। त्यसैले पनि ट्रोय नगरीलाई १९ औँ शताब्दीसम्म पनि सबैले काल्पनिक नगरीकै रूपमा लिन्थे। ट्रोय शहर प्राचीन नगरी हो भन्नेमा कोही विश्वस्त थिएनन् तर शिलम्यान भने ट्रोय साँच्चिकै शहरका रूपमा थियो या कविको महाकाव्यको कल्पना भन्ने खोजमा जुटे, ट्रोय शहरको वास्तविकता बाहिर ल्याउन तम्सिए।

कवि होमरको महाकाव्यमा उल्लेख गरिए अनुसार ट्रोजन युद्धमा माइसेनाका राजा अगामेमोनको नेतृत्वमा ग्रीसको सैन्य गठबन्धनले ट्रोय शहरलाई १० वर्ष घेराबन्दी गरेको थियो। उक्त घेराबन्दीको उद्देश्य स्पार्टाका राजा र अगामेमोनका भाइ मेनेलसकी पत्नी हेलेनलाई पुनः प्राप्ति गर्नु थियो। हेलेनलाई ट्रोजन राजकुमार पेरिसले अपहरण गरेका थिए।

ट्रोजन युद्ध अन्य स्रोतमा पनि उल्लेख गरिएको छ। महाकाव्यमा ट्रोजन युद्धको वर्णन छ। होमरले महाकाव्यमा ट्रोयलाई 'राम्ररी स्थापित', 'बलियो-निर्मित' र 'राम्रो पर्खाल भएको' शहर भनेर वर्णन गरेका छन्। होमरको महाकाव्यमा ट्रोयका

**शिलम्यानको खोजअघि ट्रोय केवल प्रसिद्ध कवि होमरको महाकाव्यको काल्पनिक नगरी मात्र थियो। ग्रीस र ट्रोयबीच भएको युद्धको कथा उनले आफ्नो काव्यमा प्रस्तुत गरेका छन्।**

वीर लडाकु र अग्ला पर्खालका सन्दर्भ समावेश छन् । जहाँ दशवर्षे घेराबन्दीमा ट्रोयको असफलतामा भौतिक कमजोरीभन्दा पनि ट्रोजन घोडाको चालबाजीलाई लिइएको छ ।

## पुरातात्त्विक अध्ययन

प्रारम्भिक कांस्यकाल (तीन हजार इसापूर्व) देखि १२ औँ शताब्दीसम्मको पुरातात्त्विक स्थललाई अहिले ट्रोय भनिन्छ । स्कमान्डा नदीको मुखबाट बनेको खाडीमा अवस्थित ट्रोयले ग्रीस र पूर्वीय सभ्यताबीच रणनीतिक स्थान ओगटेको थियो ।

ट्रोय पहिलो पटक सन् १८६३ मा फ्रान्क क्याल्भर्टद्वारा उत्खनन गरियो । त्यसपछि जर्मन पुरातत्त्वविद् हेनरिक शिलम्यानले त्यस क्षेत्रको भ्रमण गरे । शिलम्यानले सन् १८७० देखि १८९० सम्म सो क्षेत्रको २० मिटर अग्लो कृत्रिम ढिस्को उत्खनन गरेका थिए । उत्खननका क्रममा त्यहाँ सुन र चाँदीका गहनाका साथै भाँडाहरू फेला परे । यसरी शिलम्यानको प्रारम्भिक खोजले उक्त क्षेत्र वास्तवमा होमरको ट्रोय हो भनेर उनको कथालाई वास्तविकतामा प्रमाणित गर्‍यो ।





उक्त क्षेत्रको उत्खनन कार्य लामो समय जारी रह्यो र अहिले पनि जारी छ । उत्खननका क्रममा हालसम्म त्यस क्षेत्रमा नौवटा फरक शहर रहेको खुलासा भएको छ । शिलम्यानकोपछि उनको खोज कार्यलाई उनका उत्तराधिकारी डोर्पफेल्डले जारी राखे । डोर्पफेल्डले उत्खननका क्रममा भेटिएको ट्रोय शहरलाई १ देखि ९ नम्बरमा वर्गीकरण गरेका छन् । डोर्पफेल्डको वर्गीकरण अनुसारका ट्रोय शहरलाई यसरी राखिएको छ ।

ट्रोय १. इसापूर्व ३०००-२५५० शहर मानिएको छ । त्यतिबेलाको ट्रोयलाई ढुङ्गाको पर्खालले घेरिएको एउटा सानो बस्ती मानिएको छ ।

ट्रोय २. इसापूर्व २५५०-२३०० अवधिको यस शहरलाई ट्रोय- २ नाम दिइएको छ । त्यतिबेला ट्रोयमा ठूला भवनहरू, माटो-इँटा र ढुङ्गाका किल्ला तथा स्मारक गेट रहेको देखाइएको छ । ट्रोय-२ ताकाको सुन, चाँदीका गहनासमेत फेला पारिएको छ ।

ट्रोय ३ देखि ५ - यसको समयावधि २३००-१५५० इसापूर्व मानिएको छ ।  यतिबेलाको ट्रोय कम समृद्ध भएको मानिएको छ ।

ट्रोय ६. १७५० देखि १३०० इसापूर्व अवधिको ट्रोयलाई वर्तमान समयमा दृष्टिगोचर हुने भग्नावशेषको अवधि मानिएको छ । ट्रोय शहर होमरको ट्रोजन युद्धको घेराबन्दीमा यही समयमा परेको थियो । ट्रोय- ६ ताका शहरमा चुनढुङ्गाका ठूलाठूला ब्लक

र आठ मिटरसम्म अग्ला धेरै टावर निर्माण तथा किल्लाका पर्खालहरू बनाइएको मानिएको छ। यस कालखण्डले ट्रोय शहरको समृद्धि चुलीमा रहेको देखाइएको छ। त्यतिबेला ट्रोय शहरलाई चट्टान काटिएको खाडलद्वारा सुरक्षित गरिएको थियो। उत्खननका क्रममा फेला परेका ट्रोय ६- कालीन माटाका भाँडाकुँडा ग्रीसमा पाइने भाँडासँग मिल्दोजुल्दो देखिएका छन्।

ट्रोय ६ कै बेला यो शहर आंशिक रूपमा नष्ट भएको मानिएको छ। उत्खननका क्रममा ट्रोय- ६ कालीन तीर, भाला आदि फेला परेका छन्। १२५० इसापूर्वको ट्रोय शहरको विनाशलाई हेरोडोटसको ट्रोजन युद्धलाई नै मानिएको छ।

ट्रोय ७ (क) १३००-११८० इसापूर्व र ट्रोय- ७ (ख) इसापूर्व ११८०-९५० अवधिमा ट्रोय शहरको आकार वृद्धि र किल्लाहरूको पुनर्निर्माण भएको देखिएको छ तर त्यतिबेलाको ट्रोय शहरको वास्तुकलामा गिरावट आएको विश्वास गरिएको छ। यतिबेलासम्म आइपुग्दा खासगरी ट्रोजन युद्धपछि ट्रोय शहरलाई विस्थापित भएको मानिन्छ।

ट्रोय ८ र ट्रोय ९-९५० देखि ५५० इसापूर्व। यतिबेलाको ट्रोय शहरमा मानव बसोबास पूर्ववत् अवस्थामा फर्कन नसकेको मानिएको छ।

## ट्रोजन युद्ध

ट्रोयका बारेमा होमरको चित्रण राजनीति नभई नारीका कारण भएको मानिन्छ। जुन ट्रोजनका राजकुमार पेरिस, स्पार्टाका राजा मेनेलोसकी पत्नी हेलेन र ग्रीस सेनाका नायक अगामेमोनको भाइबीचको प्रेम सम्बन्धबाट सुरु हुन्छ। हेलेनलाई ट्रोजनका राजकुमार पेरिसले अपहरण गरेका थिए। स्पार्टाका राजा टिन्डेरियसकी छोरी हेलेन साह्रै सुन्दर थिइन्। त्यसै कारण उनलाई राजकुमार पेरिसले अपहरण गरेका थिए।

त्यसपछि अचेन्स (ग्रीस) द्वारा ट्रोय शहरकाविरुद्धमा ट्रोजन युद्ध छेडिएको थियो। दशवर्षे युद्ध अचानक आक्रमणकारीलाई व्यर्थ देखिन पुग्यो। युद्ध मैदानबाट ग्रीसका सेनापति, राजा अगामेमोनले सैनिकहरूलाई पछि हट्ने आदेश दिए। त्यसपछि ग्रीकहरूले एउटा विशाल र खोक्रो काठको घोडा निर्माण गरे। त्यसभित्र बहादुर योद्धाहरूको सानो समूह लुकाइयो। ग्रीस सेनाले उक्त नक्कली काठको घोडा ट्रोय नजिकै समुद्र तटमा उपहारका रूपमा छोडे।

ट्रोजनहरूलाई ग्रीकहरूबाट देवी एथेनालाई ट्रोयको मन्दिर अपवित्र पार्ने पापको प्रायश्चित



गर्न र उनीहरूको सुरक्षित यात्रा सुनिश्चित गर्नका लागि घोडा उपहार दिइएको बताइयो। ट्रोजनका पुजारी लाओकुनले उपहार दिने ग्रीकहरूबाट डर लाग्छ भन्दै ट्रोजनहरूलाई सचेत गराए तर कुनै पनि ट्रोजनले उनको चेतावनी स्वीकारेनन्। त्यसपछि घोडालाई शहरको ढोकाभित्र लगियो। त्यो रात घोडामा लुकेका ग्रीसका सैनिक बाहिर निस्किए र ग्रीसका अन्य सैनिकलाई भित्र्याउन ट्रोयका ढोका खोलिदिए।

यसरी घोडाभित्र लुकेर ट्रोय शहरमा घुसेका ग्रीसका सिपाहीका कारण ट्रोजनहरूले युद्ध हारे। सोही कारण अहिले पनि कुनै देशमा बाह्य शक्तिका रूपमा घुसपैठ गर्ने व्यक्तिलाई 'ट्रोजन हर्स' का रूपमा व्यङ्ग्य गर्ने गरिएको छ। ■

अस्ट्रेलियामा पर्ने फ्रेजर टापुको सिर्जना मूल भूमिमा हजारौँ वर्षदेखि उडिरहेको बालुवाद्वारा भएको छ। यस टापुको लम्बाइ एक सय २२ किलोमिटर र चौडाइ २२ किलोमिटर छ।

सन् १९९२ मा यस टापुलाई विश्व सम्पदा सूचीमा समावेश गरिएको थियो। विश्वमा सबैभन्दा ठूलो बलौटे टापुमा यसको नाम सूचीकृत छ। यो बुचुल्ला मानिसको पारम्परिक भूमि हो र सन् २०१६ को जनगणना अनुसार यहाँ एक सय ८२ बुचुल्ला मानिसको बसोबास रहेको छ। ■

*-युवामञ्च*





# धीरेन्द्र प्रेमर्षि

नेपाली, मैथिली र हिन्दी भाषामा उत्तिकै दक्खल भएका साहित्यकार एवं सञ्चारकर्मी धीरेन्द्र प्रेमर्षिको रुचिका अन्य क्षेत्रमा अभिनय र सङ्गीत पनि पर्दछन् । टेलिसिरियल एवं चलचित्रका कथा तथा पटकथा लेखनमा सिद्धहस्त प्रेमर्षिको चर्चित संस्था 'सिस्नोपानी नेपाल' सँग आबद्धता रहेको छ । रेडियो नेपालका जागिरे प्रेमर्षि टेलिभिजन कार्यक्रम प्रस्तोताका रुपमा पनि चर्चित छन् । मैथिली भाषामा पाठ्यपुस्तक लेखन र गीत सिर्जनामा उनी अब्बल देखिएका छन् । दुई दर्जनभन्दा बढी सिर्जना प्रकाशित गरिसकेका प्रेमर्षिको सम्पादन र अनुवादका क्षेत्रमा पनि सक्रियता देखिन्छ ।

प्रेमर्षि पुस्तकलाई ज्ञानको सागर मान्दछन् । चिन्तनको धरातललाई सुदृढ तुल्याउने र कल्पनाको आकाशलाई व्याप्ति दिने सन्दर्भमा पुस्तकको भूमिका महत्वपूर्ण हुने उनको भनाइ छ । उनी भन्छन्, "जीवन र जगत्लाई बुझ्ने, पर्गेल्ने र मार्गनिर्देश गर्ने सन्दर्भमा पुस्तक सबैभन्दा समृद्ध संयन्त्र हो । पुस्तक नभइदिँदो हो त मानव समुदायको शृङ्खलाबद्ध विकासक्रम तथा मानिसले प्राप्त गर्दै गरेका उपलब्धिको रेखाङ्कन र दस्ताबेजीकरण सम्भव हुने थिएन ।"

घरमा सानोतिनो पुस्तकालय खडा गरेका प्रेमर्षि समयक्रममा फरक-फरक पुस्तकले प्रभाव पारेको बताउँछन् । सामाजिक विसङ्गतिबारे बुझ्न र त्यसमाथि प्रहार गर्ने विचार एवं शैली निर्माण गर्न प्रो. हरिमोहन झाको मैथिली विनोद-वार्तासङ्ग्रह 'खट्टर काकाक तरङ्ग' ले गहिरो प्रभाव पारेको स्मरण गर्दछन् । यसैगरी मराठी साहित्यकार विष्णु सखाराम खाण्डेकरको पौराणिक विषयवस्तुमा आधारित उपन्यास 'ययाति', महेन्द्र मलङ्गियाको मैथिली नाटक 'ओकरा आङ्नक बारहमासा' र कनकमणि दीक्षितको 'भक्तप्रसाद भ्यागुतोको नेपाल-यात्रा, धुमधामको घुमघाम' ले चिन्तनको धरातल नै फराकिलो पारिदिएको अनुभव छ । यद्यपि आफूमा पठन-आशक्ति भने अपेक्षाकृत कम भएको उनको भनाइ छ । उनले पछिल्लो समयमा अध्ययन गरेका पाँच पुस्तकका बारेमा यसरी जानकारी दिएका छन् :

## घुरको धुवाँ




पत्रकार एवं साहित्यकार राजेश खनालको संस्मरणात्मक सन्दर्भहरू समाविष्ट निबन्धसङ्ग्रह 'घुरको धुवाँ' तराई/मधेश परिवेशको निकै पठनीय कृति हो। उनको मूलघर महोत्तरी र मावली भलुवाही, सिरहाका सन्दर्भको बडो जीवन्त चित्रण गरिएको आख्यानपरक वैशिष्ट्यका निबन्धले मिथिला-मधेशको जनजीवन, संस्कृति र चिन्तन धरातलको दुरुस्त शब्दचित्र उतार्न सफल नेपाली भाषामा लेखिएको सुन्दर मैथिली साहित्य हो। मैथिली शब्द तथा परिवेशहरूको कलात्मक प्रस्तुतिले पुस्तकलाई थप स्वादिलो बनाएको अनुभूत हुन्छ।

## खट्टर काकाक तरङ्ग




मैथिली साहित्यमा प्रायः सबैभन्दा बढी पढिएको पुस्तक हो 'खट्टर काकाक तरङ्ग।'

कुनै बेला नन्द-भाउजूबीच कोसेलीका रूपमा समेत आदानप्रदान हुने गरेको यस पुस्तकको बजारमा सधैँ अभाव हुने गरेको छ। विगतमा तीन/चारपटक पढिसकेको यो पुस्तक पुनः पढेको हुँ। जतिपटक पढ्दा पनि उत्तिकै आनन्दित तुल्याउने र ज्ञानका गहिरा-गहिरा पत्र उधिन्दै जाने विशेषता यसमा पाएको छु। प्रसिद्ध दर्शनशास्त्री हरिमोहन झाद्वारा लिखित यस पुस्तकमा सामाजिक, धार्मिक, परम्परागत विसङ्गतिहरूमाथि सरल र विनोदपूर्ण भाषामा प्रहार गरिएको छ।

## सरबरिया टोल




मैथिली साहित्य र संस्कृतिको वर्तमान समयका शिखर व्यक्तित्व डा. राजेन्द्र विमलको कथासङ्ग्रह हो 'सरबरिया टोल।' मानवीय संवेदनाको पाटालाई बडो सूक्ष्म ढङ्गले प्रस्तुत गरिएको छ। जम्मा १६ वटा कथा समाविष्ट पुस्तकले मिथिला धरातलमा उभिएर देश र मानवताको पक्षमा चिन्तन पस्किएको छ। आफूभित्रका कमजोरीका साथै विभेदी नजरतर्फ पनि औँल्याइएको छ। समाजको नाङ्गो यथार्थलाई गहराइमा पुगेर खोतल्ने र अतियथार्थवादी चित्र प्रस्तुत गर्ने डा. विमलको सिर्जनात्मक वैशिष्ट्य यसमा पनि कायम छ।

## लू




प्रसिद्ध आख्यानकार नयनराज पाण्डेको 'लू' मैले हालै दोहोऱ्याएर पढेको उपन्यास हो। पश्चिम तराईको अवधीभाषी समाजको चित्र र चरित्र खिप्ने सिद्धहस्त पाण्डेको शैली अत्यन्त प्रवाहपूर्ण र प्रभावशाली लाग्छ। सुन्दर चलचित्र हेरिरहेझैँ भान हुने उनको यस कृतिले मिथिलाको जीवनचरित र मानसिकतालाई पनि प्रतिनिधित्व गर्ने अनुभवसाथ चलचित्र बनाउन सकिने कथावस्तुका रूपमा लिएको छु।

## पुरुष-परीक्षा




चौधौँ शताब्दीका सुप्रसिद्ध कवि तथा विचारक महाकवि विद्यापतिद्वारा रचित संस्कृत भाषाका कथाको सँगालो हो 'पुरुष-परीक्षा।' इस्वी संवत् १४०२ देखि १४०६ का बीच लेखिएका नीतिप्रधान ४४ वटा कथा समाविष्ट यस सङ्ग्रहमा विभिन्न कथानकको दृष्टान्तबाट उत्तम पुरुष वा मानव कस्ता हुन्छन् भन्ने खुट्याउने काम गरिएको छ। सातौँ शताब्दीको 'पञ्चतन्त्र' र तेह्रौँ शताब्दीको 'हितोपदेश' पछि संस्कृत साहित्यको तेस्रो अमूल्य निधिका रूपमा परिगणित पुरुष-परीक्षाका कतिपय कथा अहिले पनि सान्दर्भिक देखिन्छन्। इस्वी संवत् १८१५ मै यसको अङ्ग्रेजी अनुवाद प्रकाशित भएको र भारतमा ब्रिटिस सरकारको लोकसेवामा पाठ्यक्रमका रूपमा समावेश गरिएको सन्दर्भले पनि यसको महत्त्व उजागर गर्दछ। यसको मैथिली, हिन्दी र अङ्ग्रेजी संस्करणहरूको आधारमा नेपालीमा अनुवाद गर्नेक्रममा गहिरो अध्ययन गरेको हुँ। मैले यस कृतिको नेपाली अनुवाद गरेर केही समयअघि प्रकाशनमा ल्याएको छु। ■

*– प्रस्तुति : तुलसीहरि कोइराला*

# एसइईपछिको
# व्यावहारिक ज्ञान

■ रक्षा कोइराला

**हाम्रा अभिभावकले यति वर्षको हुँदा यसो गरेथ्यौँ र उति वर्षको हुँदा उसो गरेथ्यौँ भनेर सुनाइरहनुहुन्छ । हजुरबुवा र हजुरआमाको त विवाह दस वर्ष पुग्दा नपुग्दै भएथ्यो रे ! बाबाममीको पालोसम्म आइपुग्दा भने २० वर्ष पार हुन लागेको थाहा पाइयो ।**

यस्तो हुनु भनेको समयको परिवर्तन नै रहेछ। हामी स्वयंलाई त आफू सानै भएझैँ लाग्ने नै भयो। उहाँहरू पनि यो केटाकेटी नै छे, सानै छे, केही जान्दिन, पछि सिकिहाल्छे नि भन्नुहुन्छ। उहाँहरूले नै त्यति भनेपछि आफूलाई झनै केटाकेटी बन्न मन लाग्ने रहेछ। लाडिन, अझै माया पाउन र मीठो मसिनो खाइरहन मन लाग्ने रहेछ !

खासमा एसइई दिने उमेरसम्म आइपुग्दा हामी केटाकेटी नै हुँदारहेछौँ। अभिभावकले अह्राएको सामान्य काम जसोतसो गर्नेभन्दा पर आफ्नो विवेक र ज्ञानले कुनै काम गर्न अघि सर्ने रहेनछौँ। मनले नै नअह्राएपछि जाँगर कहाँबाट आओस् ?

हजुरआमाले भन्नुहुन्थ्यो, “ज्ञानले देखेर आफैँ गर्ने उत्तम, यसो गर भनेर अह्राएपछि मात्र गर्ने मध्यम र अह्राएको पनि नटेर्ने अधम हो।”

अधम नै बनिहाल्न चाहिँ भएन। जसोतसो मध्यमसम्म बन्ने गरिएको छ। एसइई दिएर बसेको खाली समयमा भने आफैँलाई पनि केही सीप सिकौँ जस्तो लाग्ने रहेछ। ‘प्लस टु’ को अन्तिम परीक्षा दिएपछि चाहिँ केही खाने कुरा आफैँ बनाएर खाऔँ, बाबाममीलाई पनि खुवाऔँ जस्तो लाग्ने रहेछ। मलाई मात्र यस्तो लागेको पक्कै पनि होइन होला। तपाईंहरूलाई पनि यस्तै लागेको हुनुपर्छ। माथिल्लो तहको अध्ययनका लागि ‘बृजकोर्स’ गर्ने अन्य विदेशी भाषा सिक्ने, कम्प्युटर प्रोग्रामहरू सिक्ने त छँदैछ। यसबाहेक घरायसी कामकाज पनि सिकेको खण्डमा आफ्नै लागि काम लाग्ने रहेछ भन्ने लागेको छ। तपाईंले केके सिक्नुभयो ? मैले सिकेका केही सीप यस्ता छन्:



**खाना बनाउने :**

प्रायःजसो ममीले नै गर्ने खाना पकाउने काम उहाँले गरेको देख्दा त सजिलै हुन्छ जस्तो लाग्थ्यो। आफूले गर्न खोज्दा त निकै कठिन पो लाग्दोरहेछ। जे समात्यो त्यही ढल्ने, जे झिक्यो त्यही पोखिने ! किन यस्तो भएको होला ? तपाईंले गर्दा पनि यस्तै भएको थियो कि ?





जसोतसो दाल, भात र तरकारी पकाउन जाने पनि अचार बनाउन निकै गाह्रो हुने रहेछ। तरकारी केलाउने काम त झनै गाह्रो। पखालेर कटकट 'चपबोर्ड'मा काट्दा हुने त सजिलो नै हो तर केलाउनुपर्ने तरकारीचाहिँ निकै झन्झट लाग्ने। तिनै तरकारी स्वास्थ्यका दृष्टिले महत्त्वपूर्ण भएपछि मेहनत गर्नै पर्‍यो। साग केलाएर काट्न, पखाल्न निकै समय लाग्ने रहेछ। फर्सीको मुन्टा त झन् धर्सा निकाल्नुपर्ने रहेछ! आलु खुर्किएर काटेजस्तो अरू तरकारी सजिलो नहुने रहेछ तर पनि काम चलाउसम्म हुने गरी तरकारी केलाएर पकाउन जान्दा ठुलै काम जानेँ जस्तो लागेको छ।

अचार बनाउँदा पनि नुन, अमिलोको मात्रा मिलाउन निकै सावधानी अपनाउनुपर्ने रहेछ। सबै कुराको मात्रा मिलाउन जानिएन भने मीठो नहुने रहेछ।

### चिया कफी बनाउने :

घरमा सबैभन्दा धेरै गर्नुपर्ने नै यही रहेछ। पाहुनापाछा, आफन्त आउँदा तथा घरकै मान्छे बाहिर गएर आउँदा, बिहान, बेलुका जतिबेला पनि चिया कफी बनाउनुपर्ने। आफू खान्न भनेर पनि नहुने। अरूको लागि बनाउनै पर्ने। दूध, चिनी, चियापत्ती, मसला, कफीको मात्रा मिलेन भने ढङ्ग नभएको अबगाल आउने रहेछ। अब भने यस्तो अबगालबाट जोगिने सीप सिकेका कारण ढुक्क लागेको छ।

### खाजा बनाउने :

खाजाका लागि परिवारमा एकै खालको रुचि नहुँदा थरीथरीका परिकार बनाउनुपर्ने हुँदो रहेछ। हलुवा पकाउने, सुक्खा रोटी पकाउने, चाउचाउ, अमलेट, तरकारी, पकौडी यस्तै यस्तै परिकार तयार पार्न जानेपछि सामान्यतः कामचलाउ हुने रहेछ। ममीले गरेका एक हप्ताका कामलाई नजिक रहेर हेरेपछि सिक्ने चाहना हुँदा सिक्न सकिने रहेछ भन्ने आफैँबाट पुष्टि भयो।

घरमा नियमित पाक्ने परिकारबाहेक अन्य परिकार युट्युबको सहायताले पनि बनाउन सकिने रहेछ। केक बनाउन, मःम बनाउन यसरी नै सिकेकी हुँ। आफ्ना साथीहरू आउँदा अब भने ममीलाई गुहार्नु पर्दैन आफैँ मन लागेको कुरा बनाएर खुवाउन सक्ने भएकी छु। मैले आफैँ बनाएर खुवाएको देख्दा पहिलो पटक त साथीहरू छक्क परेका थिए। अब त उनीहरूले पनि मेरै जसरी सिकिसकेछन्।

अभिभावकलाई खुसी राख्न सकियो भने आफैँलाई फाइदा हुने रहेछ। उहाँहरूलाई खुसी राख्न धेरै मेहनत पनि आवश्यक नपर्ने। सानातिना काम मात्र सघाइदियो भने ठुलै खुसी भित्रिँदो रहेछ।

व्यावहारिक सीप सिकेर आफैँ रमाऔँ, परिवारलाई खुसी राखौँ। ■

# सातुको शक्ति



■ आरबी बुढाथोकी



'ड्राइ फ्रुट्स' प्रयोग गरेर बनाइने 'मल्टिग्रेन' सातु बजारमा किनेको भन्दा आफैँले घरमा तयार गरेको उत्तम हुन्छ । पहिला पहिला पेट भर्न सातु खाइन्थ्यो भने अचेल धेरैले खाना भनेको पेट भर्न मात्र होइन स्वस्थ, तन्दुरुस्त र दीर्घजीवनका लागि खाइनु पर्छ भन्ने बुझेका छन् ।

सातु नेपालीको धेरै पुरानो र मौलिक परिकार हो । सातु बिहानको खाजा मानिने भए पनि पछिल्लो समय यसलाई बिहान, दिउँसो, बेलुका कुनै पनि समय खान थालिएको छ । सातु आफैँमा सन्तुलित पौष्टिक आहार भएका कारण बच्चादेखि बुढाबुढी सबैलाई यो उत्तम मानिएको छ ।

परम्परागत रूपमा सातुलाई महीसँग खाने गरिन्थ्यो भने पछिल्लो समय तातो या चिसो पानी, तातो या चिसो दूधसँग मात्र नभई विभिन्न फलफूलको रस या दहीसँग समेत खान थालिएको छ । कर्नफ्लेक्स, मुस्ली, चोकोज, ओट्स जस्ता पूर्ण प्रशोधित खाद्यवस्तुभन्दा सातु कैयौँ गुणा स्वास्थ्यवर्धक छ ।





सातुमा भिटामिन, खनिजहरू, क्याल्सियम, प्रोटिन र फाइबरसमेत पर्याप्त पाइने हुँदा सबै उमेर समूहका लागि यो एक सन्तुलित आहार मानिन्छ। अचेल व्यावसायिक समूहले सातुलाई बजारीकरणसमेत गरेका छन्। काजु, बदाम जस्ता महँगा वस्तु मिसाएर सातु बनाई बजारमा पठाउने गरिएको देखिन्छ।

तर सबैभन्दा स्वस्थकर सातुचाहिँ हामीले परम्परागत रूपमा बनाउने सातु नै हो। जुन माटोको हाँडीमा भुटेर ढुङ्गाको जातोमा पिसिन्थ्यो र ताजा ताजा खाने गरिन्थ्यो। अचेलका व्यावसायिक सातु धेरै दिन बजारमा रहने हुँदा त्यसको प्रभावकारिता र स्वस्थता समेत ह्रास भएको हुन्छ। तिनमा फाइबर पनि कमै पाइन्छ।

सातु एकै दिन पटक पटक खानु राम्रो मानिन्न र सुत्ने बेलामा पनि सातु नखाँदा राम्रो। सातु खाँदाखाँदै पटक पटक पानी पिउनु पनि राम्रो होइन र चपाइरहनु पनि उत्तम होइन। मिठो भयो भनेर धेरै सातु खानु पनि राम्रो हुँदैन।

वैशाख शुक्ल तृतीया अर्थात् अक्षय तृतीयामा जौको सातु र सर्बत खाने चलन परापूर्वकालदेखि चल्दै आएको छ। सातुको महत्त्व आयुर्वेदमा समेत प्रस्ट पारिएको छ। सातुलाई कण्ठरोग, नेत्ररोग, भोक, प्यास, थकान, उल्टी आदि नाशक भनेर उल्लेख गरेको छ। नियमित सातु खाने मानिसलाई मधुमेह, कुष्ठरोग, क्षयरोग नहुने बताएको छ।

लामो यात्रामा हिँड्दा या कामकाजमा व्यस्त हुनेले नियमित रूपमा सातु खाने परम्परा विगतमा थियो।

### ग्रीष्म ऋतुमा सातुको सर्बत

सातुको सर्बत नेपालमा मात्र नभई भारतमा समेत लोकप्रिय छ। शीतलताका लागि पनि सातु निकै राम्रो खाद्यवस्तु मानिन्छ। गर्मीयाममा चनाको सातु, कागती र चिसो पानी घोलेर पिउँदा पनि पर्याप्त शीतलता मिल्छ। कुनै पनि सातुमा दूध या दही घोलेर खाँदा त्यसको स्वाद बढ्छ र थप पोषिलो पनि हुन्छ। दही र केरामा मिसाएर खाँदा पनि सातुको स्वाद बढ्छ।

सर्बतका रूपमा उपभोग गर्न सातुमा नुन, पानी र कागती मिसाउँदा हुन्छ। गुलियो मन पराउनेले सक्खर, मिस्री, मह या 'फ्रुट सिरप' मिसाएर

**सातु खाँदाखाँदै पटक पटक पानी पिउनु पनि राम्रो होइन र चपाइरहनु पनि उत्तम होइन। मिठो भयो भनेर धेरै सातु खानु पनि राम्रो हुँदैन।**





पिउँदा उत्तम हुन्छ। मकै, भटमास, गहुँ, चना, केराउ, जौँ, गहुँ भुटेर बनाइएको सातु उत्तम र सर्वप्रिय सर्वोतम सातु मानिन्छ।

कडा शारीरिक व्यायाम गर्ने खेलाडी, सैनिक तथा कडा परिश्रम गर्नेका लागि सातुको सर्बत उत्तम पेय पदार्थ हुन्छ। सातुले तत्काल ऊर्जा सञ्चार गर्ने हुँदा बिहान जिम, व्यायाम र योग गर्नेहरूले पनि सातुको सर्बत पिउन सक्छन्। गाउँघरमा बिहानै मेलापात, घाँस दाउरा गर्नेले पनि सातु सर्बत पिउने गरेको हामी देख्छौँ।

स्कुल र कलेज अध्ययन गर्ने विद्यार्थीले पनि नियमित रूपमा सातुको सर्बत पिउन सक्छन्। पानीको तुम्लेटमा सातु सर्बत घोलेर दिनभरि थोरै थोरै पिउँदा पनि उत्तम हुन्छ। बच्चामा सातुको सर्बत पिउन बानी पार्नका लागि काजु, बदाम, स्ट्रबरी सिरप मिसाएर सर्बत बनाउन सकिन्छ।



## सातुको परोठा

सातुबाट परोठा पनि बनाउन सकिन्छ। मैदामा नुन हालेको सातु भरेर बेल्ने अनि तावामा सेकेर परोठा बनाउने गरिन्छ। पाकेको परोठामा थोरै घिउ हाली डामेर गोलभैँडाको अचार या छोपसँग नास्ताका रूपमा लिन यो परोठा खान सकिन्छ। यो व्यञ्जनका लागि पिठो मुछ्दा थोरै नुन हालेर मुछ्नु पर्छ र मुछेको पिठोलाई आधा घण्टा छोपेर राख्नु पर्छ। सातु भरेको परोठामा गुलियो मन पराउनेले सातुको साथमा सक्खर पनि हाल्न सक्छन्। ■

# असाधारण कोयन

■ रमेश खनाल



दुई छोराछोरीकी आमा नेदरल्याण्ड्सकी एथलेटिक्स खेलाडी फनी ब्ल्याङ्कर्स कोयनलाई ओलम्पिकमा चारवटा स्वर्ण पदक जित्ने असाधारण खेलाडीका रूपमा चिनिन्छ ।

कोयनले सन् १९४८ को लन्डन ओलम्पिकमा १०० मिटर, २०० मिटर, ८० मिटर बाधा दौड (हर्डल्स) र ४ गुणा १०० मिटर रिले दौडमा स्वर्ण पदक जितेकी थिइन् । उनीभन्दा अगाडि र त्यसपछि एउटै ओलम्पिकमा एथलेटिक्सका चार विधामा स्वर्ण पदक जित्ने खेलाडी कोही पनि छैन । तसर्थ सन् १९४८ को लन्डन ओलम्पिक कोयनको असाधारण सफलताले चिनिन्छ ।

महिला त्यसमाथि पनि दुई बच्चाकी आमा, घरगृहस्थी भएर खेलकुदमा समेत समर्पित भई एकै ओलम्पिकमा चार स्वर्ण पदक हात पारेर आफ्नो र राष्ट्रको नाम उच्च पार्न सक्नु कुनै चानचुनै कुरा होइन । कोयन यस सफलताले सदा स्मरणीय छिन् ।

ट्रायक एन्ड फिल्डमा कोयन एक बेजोड खेलाडी थिइन् । उनले सन् १९४६ देखि सन् १९५० सम्म युरोपेली च्याम्पियनसिपहरूमा स्वर्ण पदक जितिन् । कोयनले लङजम्प, हाइजम्प, हर्डल्स, स्प्रिन्ट जस्ता स्पर्धामा विश्व कीर्तिमानसमेत बनाएकी थिइन् । उनले पेन्टाथलन स्पर्धामा समेत विश्व कीर्तिमान बनाइन् ।

कोयनले सन् १९५५ मा ३७ वर्षको उमेरमा प्रतिस्पर्धात्मक खेलबाट अवकाश लिइन् । त्यसपछि उनलाई नेदरल्यान्ड्सको महिला ट्रायक एन्ड फिल्ड टिमको नेतृत्व दिइएको थियो । त्यसैगरी सन् १९९५ मा उनलाई इन्टरनेसनल एसोसिएसन अफ एथलेटिक्स फेडरेसनले 'फिमेल एथलेट अफ द सेन्च्युरी' उपाधिले सम्मानित गऱ्यो । उनले आफ्नो मेहनत र सफलताबाट महिलाप्रति रहेका धेरै अन्धविश्वास तोडेकी थिइन् । खेल खेल्नका लागि उमेर र मातृत्वले अवरोध उत्पन्न गर्दैन तथा आत्मविश्वास छ भने सफलता धेरै टाढा हुँदैन भन्ने उनले सिद्ध गरिदिइन् ।

उनी एक सफल माता थिइन् । त्यसैले उनलाई 'द पलाइङ हाउस वाइफ' पनि भन्ने गरिन्थ्यो । त्यसैगरी अन्तर्राष्ट्रिय सञ्चारमाध्यमहरूले उनलाई 'द पलाइङ डचमम' र 'अमेजिङ फनी' समेत भन्यो ।

फनीले पहिले धेरै खेल खेलिथिन् । उनलाई आफ्ना लागि कुन खेल उपयुक्त हो थाहा थिएन । कोयनलाई कसैले पौडी ठिक हुन्छ भन्थे त कसैले स्प्रिन्ट । कसैले हाइजम्प ठिक भएको सुझाव दिन्थे तर जब कोयनको भेट पूर्वओलम्पिक च्याम्पियन जेन ब्ल्याङ्करसँग भयो उनले कोयनलाई ट्रायक एन्ड फिल्डमा ध्यान केन्द्रित गर्न सुझाव दिए । यति मात्र होइन जेनले कोयनलाई प्रशिक्षणसमेत दिन थाले । अन्ततः कोयनले ट्रायक एन्ड फिल्डबाट ठूलो नाम कमाइन् ।

जेनसँग पछि कोयनको विवाहसमेत भयो । कोयनलाई जेनले सधैँ अगाडि बढ्न हौसला, प्रेरणा दिए ।

सन् १९४८ को ओलम्पिकमा चार स्वर्ण पदक जितेर असाधारण उपलब्धि हासिल गरी कोयन स्वदेश फर्किंदा राजधानी एमर्स्टड्याममा उनको भव्य स्वागत र सम्मान गरिएको थियो । हजारौँ खेलप्रेमी कोयनको स्वागत गर्न बाटोमा लामबद्ध भएका थिए । विशेष सम्मान प्रदान गर्न कोयनलाई सेतो घोडा जोतिएको बग्गीमा राखेर नगर परिक्रमा गराइएको थियो ।

नेदरल्यान्ड्सकी महारानी जुलियानाद्वारा 'नाइट अफ द अर्डर अफ अरेन्ज नासिउ' उपाधि प्रदान गरियो । कोयनको मृत्यु हुनुभन्दा एक वर्षपहिले खेलकुद पत्रकार केस कोम्यानले उनको जीवनी प्रकाशित गरेका थिए । उनले आफ्नो खेल जीवनमा जनाएका सहभागिता, पाएका सफलता र पत्रपत्रिकामा दिएका अन्तर्वार्ताहरू समेटिएको छ ।

नेदरल्यान्ड्सको बार्नमा सन् १९१८ अप्रिल २६ मा जन्मिएकी कोयनको कद पाँच फिट नौ इन्च थियो । सन् २००४ जनवरी २५ मा ८५ वर्षको उमेरमा उनको निधन भएको थियो । ■

# यार्सागुम्बाको वैज्ञानिक व्यवस्थापन





**नेपाल प्राकृतिक स्रोत, साधन र सुन्दरताले भरिपूर्ण छ । समग्र नेपालीको जीविकोपार्जन, विकास र प्रगतिमा यहाँ रहेको प्राकृतिक सम्पदाको उचित व्यवस्थापन र दिगो उपयोगको महत्त्वपूर्ण भूमिका रहन्छ । प्राकृतिक सम्पदामध्ये वनमा पाइने अलौकिक तथा अद्वितीय जडीबुटी र गैरकाष्ठ वन पैदावरको महत्त्वपूर्ण स्थान रहेको छ ।**



डा. माधव अधिकारी

देशभित्र पाइने सूचीकृत करिब सात सय प्रजातिका जडीबुटीजन्य वनस्पतिमध्ये यार्सागुम्बा पनि एक हो । यार्सागुम्बालगायत अन्य महत्त्वपूर्ण जडीबुटीको बिक्री वितरणबाट दार्चुला, जुम्ला, गोरखा, लमजुङ तथा डोल्पालगायतका जिल्लामा करोडौँ रुपियाँ बर्सेनि भित्रिने गर्दछ ।

यार्सागुम्बा जाडोमा कीरा र गर्मीमा घाँस बन्ने एक अनौठो प्रजातिको वनस्पति–जीव हो । यो आधा वनस्पति र आधा कीराजस्तो

हुन्छ। यार्सागुम्बालाई शक्तिवर्धक र दुर्लभ बहुमूल्य जडीबुटी मानिएको छ। यार्सागुम्बा हाम्रो देशको हिमाल र पहाडी जिल्लाका लेकाली खर्क, पाटन तथा माडीमा पाइन्छ। यो जडीबुटीलाई दुई सय वर्षअगाडि चीनको तियान भन्ने विद्वान्‌ले शक्तिवर्धक बहुमूल्य जडीबुटी भनेपछि यसको प्रयोग सुरु भएको भनाइ छ। यार्सागुम्बाको बजार, व्यापार र मूल्य आकासिँदो छ तथा अन्तर्राष्ट्रिय बजारमा यसको माग धेरै छ। नेपालको सन्दर्भमा विगतमा भन्दा हाल यार्सागुम्बा सङ्‌कलन बढेको छ।





यस वर्ष पनि वैशाखदेखि साउनसम्म यार्सागुम्बा सङ्‌कलनका लागि मानिसहरू लेकको माडी/पाटनतिर लागेका छन्। यार्सागुम्बा सङ्‌कलनको उचित समय वैशाखदेखि साउन महिनासम्म हो। यार्सागुम्बा सङ्‌कलनका क्रममा चिसो र घपेडी तथा लेक लागेर कतिपय सङ्‌कलनकर्ताले बिरामी भएर ज्यान गुमाउँछन्। मुख्यतः यार्सागुम्बा गोरखा, लमजुङ, रसुवा, म्याग्दी, मुस्ताङ, दार्चुला, बझाङ, जुम्ला, मुगु, डोल्पा आदि हिमाली जिल्लामा पाइन्छ।

स्थानीय बासिन्दाले यार्सागुम्बा सङ्‌कलन गर्दछन्। नेपालमा सबैभन्दा बढी यार्सा सङ्‌कलन गरिने जिल्ला बझाङमा जलवायु परिवर्तनका कारण यार्सा उत्पादन घट्ने गरेको छ। आयस्रोतको प्रमुख माध्यम यार्साको उत्पादन घट्दा बझाङ जस्तै अन्य हिमाली जिल्लाको अर्थतन्त्रमा ठूलो असर परेको छ। स्मरण रहोस् बझाङमा मात्र विगतमा करिब एक अर्ब रुपियाँ बराबरको यार्सा कारोबार हुने गरेको थियो।

नेपालको यो जडीबुटी ताइवान, हङकङ, सिङ्गापुर, तिब्बत आदि ठाउँमा निकासी हुन्छ। यो जडीबुटी प्रतिकेजी तीन लाख (गुणस्तर हेरी) देखि १२ लाख रुपियाँको दरमा बिक्री हुने गरेको छ।

अवैज्ञानिक सङ्‌कलन र जलवायु परिवर्तनले गुणस्तरीय यार्सागुम्बा उत्पादनमा ह्रास आएको छ। अतः वैज्ञानिक तरिकाबाट अमृतसमान यार्सागुम्बा सङ्‌कलन गरिनुपर्ने देखिन्छ। बिनाव्यवस्थापन सङ्‌कलन मात्र गर्नाले यार्सागुम्बालगायतका कैयौँ अमूल्य जडीबुटी पैदावार मासिँदै र नासिँदै गएका छन्।

अमूल्य जडीबुटीबारे नेपाली वा स्थानीय भाषामा लेखिएको जानकारीमूलक सामग्रीको उपलब्धताले जडीबुटी संरक्षणमा ठूलो टेवा पुग्न सक्ने देखिन्छ। ■

*लेखक : डा. अधिकारी गुणस्तर जीवन विषयमा विद्यावारिधि हुन्।*

टिपन टापन

# इन्टरनेट प्रयोगको तथ्याङ्क



१. फोर्ब्स होमका अनुसार विश्वको आठ अर्ब जनसङ्ख्यामध्ये ५.३५ अर्ब अर्थात् ६६ प्रतिशत मानिस इन्टरनेटको पहुँचमा छन् ।

२. इन्टरनेट प्रयोगकर्ताको सङ्ख्या तीव्र गतिमा बढ्दो छ । जसका कारण सन् २०२९ सम्ममा अहिलेको सङ्ख्यामा ४७ प्रतिशत वृद्धि भएर ७.९ अर्ब पुग्ने अनुमान गरिएको छ । प्रत्येक वर्ष ८.२ प्रतिशतका दरले प्रयोगकर्ताको सङ्ख्या बढ्ने गर्दछ ।

३. ग्लोबल वेभ इन्डेक्सका अनुसार इन्टरनेट प्रयोगकर्ताको सङ्ख्या उमेर समूह अनुसार फरक फरक छ । औसत रूपमा मानिसले साढे छ घण्टा इन्टरनेटमा बिताउँछन् तर ५५ देखि ६४ उमेर समूहका मानिसको तुलनामा १६ देखि २४ वर्ष उमेर समूहका मानिसले साढे दुई घण्टा बढी समय इन्टरनेट चलाएर बिताउँछन् ।

४. १५ देखि २४ वर्ष उमेर समूहका मानिसमध्ये ७५ प्रतिशतमा इन्टरनेटको पहुँच छ भने २५ वर्षभन्दा माथिको उमेर समूहका ६५ प्रतिशतमा मात्रै इन्टरनेटको पहुँच छ ।

५. रेसिपी, फेसन, फाइनान्स र होम डेकोर जस्ता विषयमा हरेक दिन ७५ लाख ब्लग पोस्ट हुने गरेको छ ।

६. पछिल्लो तथ्याङ्क अनुसार ५.०४ अर्ब मानिसले फेसबुक, इन्स्टाग्राम र टिकटक जस्ता सोसल मिडिया प्लेटफर्म प्रयोग गर्छन् ।

७. ४१ वर्षअघि अर्थात् सन् १९८३ जनवरी १ मा आधिकारिक रूपमा इन्टरनेट सुरु गरिएको थियो ।

८. औसत रूपमा मानिसले अचेल लगभग चार घण्टा समय मोबाइल फोनमा इन्टरनेट चलाएर बिताउँछन् । यसैगरी नेट टिभीमा दुई घण्टा तथा एक घण्टा समय डेस्कटप र ल्यापटप जस्ता पर्सनल कम्प्युटरमा बिताउँछन् ।

९. विश्वको कुल इन्टरनेट प्रयोगकर्तामध्ये एसियामा मात्रै ५० प्रतिशतभन्दा बढी प्रयोगकर्ता छन् ।

१०. सबैभन्दा लोकप्रिय सर्च इन्जिन गुगल हो भने ९२.१७ प्रतिशतले यो सर्च इन्जिन प्रयोग गर्छन् । हरेक दिन गुगलले सरदर तीन अर्ब पटक जति सर्च गर्छ ।

११. विश्वको पहिलो वेभसाइट सन् १९९१ अगस्ट ६ मा बेलायती भौतिकशास्त्री टिम बर्नर्स लीले प्रकाशित गरेका थिए । विश्वमा हाल १९ करोड ८० लाख वेबसाइट छन् ।

१२. सन् २०३० सम्ममा विश्वमा एक खर्ब २५ अर्बभन्दा बढी इन्टरनेट जडित डिभाइस हुने प्रक्षेपण छ । ■

*–बद्रीप्रसाद घिमिरे*



# चुनावमय भारत





■ रामप्रसाद आचार्य

भारतलाई ठूलो लोकतान्त्रिक चुनाव अभ्यास गर्ने मुलुक मानिन्छ। त्यहाँको चुनावको विशिष्टतालाई विश्व समुदायले नजिकबाट हेर्ने गर्दछ। यतिखेर त्यहाँ १८औँ लोकसभाका लागि डेढ महिना लगाएर सात चरणमा चुनाव भइरहेको छ। पाँचवर्षे कार्यकालका लागि अप्रिल १९ देखि सुरु भएको चुनाव जुन १ मा सम्पन्न हुनेछ अनि जुन ४ मा चुनावी नतिजा सार्वजनिक गरिने तयारी छ।

भारतको लोकसभा ५४५ सदस्यीय छ। यसमध्ये ५४३ स्थानका लागि जनस्तरमा मतदान गरिन्छ भने दुई स्थान 'एङ्ग्लो-इन्डियन' भनिने समुदायबाट राष्ट्रपतिले मनोनयन गर्ने व्यवस्था छ। बहुमतको सरकार बनाउन कम्तीमा २७२ सिट ल्याउनुपर्छ।

यस पटक लोकसभा चुनावका लागि भारतमा ९६ करोड ८८



लाख २१ हजार ९२६ मतदाता छन् । त्यसमध्ये ४९ करोड सात लाख पुरुष र ४७ करोड एक लाख महिला मतदाता छन् । ती मतदाताका लागि देशभर साढे १० लाख मतदान केन्द्र र मतदानका लागि ५५ लाख इलेक्ट्रोनिक भोटिङ मेसिनको व्यवस्था गरिएको छ । त्यसैगरी मतदानमा एक करोड ५० लाख कर्मचारी र स्वयंसेवक परिचालन गरिएको छ ।

भारत विश्वमा सबभन्दा बढी जनसङ्ख्या भएको देश हो । त्यहाँको जनसङ्ख्या एक अर्ब ४३ करोडभन्दा केही बढी छ । करिब ९७ करोड मतदाता रहेको भारत एक्लैले अमेरिका, युरोपेली सङ्घ र रुसका कुल मतदाताभन्दा बढीको प्रतिनिधित्व गर्छ । यति ठूलो लोकतान्त्रिक अभ्यास गर्ने भारतको चुनाव यही कारणले पनि बढी चर्चामा आउने गरेको छ ।

सन् १९४७ मा बेलायतको उपनिवेशबाट स्वतन्त्र भएको भारतमा सन् १९५१ मा पहिलो संसद्को चुनाव भएको थियो । त्यतिबेला प्रविधि र जनशक्तिको कमीले गर्दा चुनाव सम्पन्न गर्न पाँच महिना लागेको थियो भने चुनावको परिणाम सन् १९५२ मा मात्र सार्वजनिक गरियो । यस हिसाबले हेर्दा अहिले डेढ महिनामा सात चरणमा चुनाव गराएर लगत्तै परिणाम सार्वजनिक गर्ने प्रयासलाई स्वाभाविक नै मान्नुपर्छ ।

त्यहाँको निर्वाचन आयोगका अनुसार यसपटक अप्रिल १९ मा पहिलो चरण, अप्रिल २६ मा दोस्रो, मे ७ मा तेस्रो, मे १३ मा चौथो, मे २० मा पाँचौं, मे २५ मा छैटौं र जुन १ मा सातौं चरणको मतदान हुनेछ । पहिलो चरणमा लोकसभाका १०२ सिट, दोस्रोमा ८९, तेस्रोमा ९४, चौथोमा ९६, पाँचौंमा ४९, छैटौंमा ५७ र सातौं चरणमा ५७ सिटका लागि मतदान हुनेछ ।

लोकसभा चुनावसँगै आन्द्र, उडिसा, सिक्किम र अरुणाचल प्रदेशमा विधानसभा चुनाव पनि हुँदै छ । त्यस्तै देशभर विधानसभामा रिक्त २६ सिटमा

# चन्द्रमामा बुलेट रेल



जापानी वैज्ञानिकहरूले चन्द्रमामा बुलेट रेल चलाउने तयारी सुरु गरेका छन् । जापानको क्योटो विश्वविद्यालयका शोधकर्ताहरूले काजिमा कन्स्ट्रक्सनसँग मिलेर पृथ्वीलाई चन्द्रमा र मङ्गल ग्रहसम्म जोड्ने रेलमार्ग निर्माण गर्ने योजनामा काम गरिरहेका समाचार थाहा भएको छ । योसँगै पृथ्वीभन्दा बाहिर मानिसलाई बसाउनका लागि एउटा कृत्रिम आवास बनाउने योजना पनि रहेको छ ।

जापानी शोधकर्ताहरू यसका लागि एउटा जीवन्त आवास बनाउने योजनामा जुटेका छन् । यो एउटा सोली आकारको भवन हुनेछ, जसमा पृथ्वीमै जस्तो गुरुत्वाकर्षण तथा वातावरण तयार गरिनेछ ।



उपनिर्वाचन पनि यही अवधिमा गराइँदै छ। सुरक्षाका कारण जम्मु–काश्मीरको विधानसभा निर्वाचन लोकसभा चुनावपछि हुनेछ।

पहिलो चरणमा अरुणाचल प्रदेश, असम, बिहार, छत्तीसगढ, महाराष्ट्र, मणिपुर, मेघालय, मिजोरम, नागाल्यान्ड, राजस्थान, सिक्किम, तमिलनाडु, त्रिपुरा, उत्तर प्रदेश, उत्तराखण्ड, पश्चिम बङ्गाल, अन्दमान निकोबार, जम्मु–काश्मीर, लक्षद्वीप, पन्डुचेरीको गरी १०२ निर्वाचन क्षेत्रमा मतदान सम्पन्न भएको छ । दोस्रो चरणमा असम, बिहार, छत्तीसगढ, कर्नाटक, केरला, मध्यप्रदेश, महाराष्ट्र, मणिपुर, राजस्थान, त्रिपुरा, उत्तर प्रदेश, पश्चिम बङ्गाल, जम्मु–काश्मीरको ८९ सिटका लागि तथा तेस्रो चरणमा असम, बिहार, छत्तीसगढ, गोवा, गुजरात, कर्नाटक, मध्यप्रदेश, महाराष्ट्र, उत्तर प्रदेश, पश्चिम बङ्गाल, दादर नगर हवेली र दमनद्वीपको ९४ सिटमा मतदान भयो भने चौथो चरणमा आन्द्र प्रदेश, बिहार, झारखण्ड, मध्यप्रदेश, महाराष्ट्र, उडिसा, तेलङ्गाना, उत्तर प्रदेश, पश्चिम बङ्गाल र जम्मु–काश्मीरको ९६ सिटका लागि मतदान भएको छ।

त्यस्तै पाँचौँ चरणमा छत्तीसगढ, झारखण्ड, महाराष्ट्र, उडिसा, उत्तर प्रदेश, पश्चिम बङ्गाल, जम्मु–काश्मीर, लद्दाखको ४९ सिटका लागि तथा



उक्त भवनको नाम ग्लास राखिएको छ। यसको बनावटले मानिसको शारीरिक रचनालाई कम गुरुत्वाकर्षण वा शून्य गुरुत्वाकर्षणको स्थितिमा कमजोर हुनबाट बचाउने छ। यसमा कृत्रिम गुरुत्वाकर्षणसँगै पृथ्वीकै जस्ता सुविधा हुनेछन्।

एक ग्रहबाट अर्को ग्रहमा जानका लागि ट्रान्जिटका साथै हरियाली र पानीको सुविधा पनि हुनेछ। काजिमा कन्स्ट्रक्सनले यो भवनको एउटा काल्पनिक नमुना पेस गरेको छ, जसमा यसको पूर्ण योजना देखाइएको छ।

वैज्ञानिकहरूका अनुसार सन् २०५० सम्ममा १३ सय फिट अग्लो तथा ३२८ फिट व्यासको एउटा प्रोटोटाइप तयार हुनेछ। यद्यपि यसको अन्तिम रूप बनेर सञ्चालन हुनका लागि भने एक शताब्दीसम्म समय लाग्न सक्छ। ■





छैटौँ चरणमा बिहार, हरियाणा, झारखण्ड, उडिसा, उत्तरप्रदेश, पश्चिम बङ्गाल, दिल्लीका ५७ सिटका लागि र अन्त्यमा बाँकी बिहार, हिमाचल प्रदेश, झारखण्ड, उडिसा, पञ्जाब, उत्तर प्रदेश, पश्चिम बङ्गाल र चण्डिगढको ५७ सिटका लागि मतदानको कार्यतालिका छ ।

भारतमा यसअघि सन् २०१९ मा १७ औँ लोकसभाको चुनाव पनि सात चरणमा गराइएको थियो । अघिल्लो पटक अप्रिल ११ मा मतदान सुरु भएर मे १९ मा सकिएको र मे २३ मा निर्वाचन परिणाम घोषणा गरिएको थियो ।

लोकसभा सिटको सङ्ख्याका हिसाबले सबैभन्दा ठूलो राज्य उत्तर प्रदेश हो । त्यहाँ ८० लोकसभा सिट छ । त्यसपछि महाराष्ट्रमा ४८, पश्चिम बङ्गालमा ४२ , बिहारमा ४० सिट छन् । तमिलनाडुमा ३९, मध्यप्रदेशमा २९, कर्नाटकमा २८, गुजरातमा २६, आन्द्र प्रदेश र राजस्थानमा २५/२५ लोकसभा निर्वाचन क्षेत्र रहेका छन् । उडिसामा २१, केरलामा २०, तेलङ्गानामा १७, झारखण्ड र असममा १४/१४ लोकसभा सिट छन् भने पञ्जाबमा १३, छत्तिसगढमा ११, हरियाणामा १० र दिल्लीमा सात लोकसभा सिट रहेको छ ।

यस्तै जम्मु–काश्मीरमा छ, उत्तराखण्डमा पाँच, हिमाचल प्रदेशमा चार सिट छन् । अरुणाचल प्रदेश, गोवा, मणिपुर, मेघालय र त्रिपुरामा दुई/दुई सिट छन् । अन्दमान निकोबार द्वीप, चण्डीगढ, दादर नगर हवेली, दमनद्वीप, लक्षद्वीप, मिजोरम, नागाल्यान्ड, पन्डुचेरी र सिक्किममा एक/एक सिट छन् ।

सत्तारूढ भारतीय जनता पार्टी (भाजपा)ले सन् २०१४ र २०१९ को लोकसभा चुनावमा लगातार बहुमत ल्याएको थियो । दुई कार्यकाल प्रधानमन्त्री बनेका नरेन्द्र मोदी यस पटक तेस्रो कार्यकालका लागि चुनावी मैदानमा छन् ।

सन् २०१४ मा विपक्षी भारतीय राष्ट्रिय कङ्ग्रेसलाई पराजित गर्दै भाजपा एक्लैले बहुमत ल्याएको थियो । त्यतिबेला भाजपाले २८२ सिट जितेको थियो । २०१९ मा त्योभन्दा पनि राम्रो परिणाम निकाल्दै भाजपा एक्लैले ३०३ सिट हात पारेको थियो । २०१४ को चुनावमा विपक्षी दल कङ्ग्रेसले ४४ र २०१९ मा ५२ सिट जितेको थियो । दुई चुनावबाट उत्साहित मोदीले यस पटकको चुनावमा अझ राम्रो नतिजा ल्याउने दाबी गरेका छन्

मोदीलाई राहुल गान्धीको नेतृत्वमा कङ्ग्रेससहित विपक्षी दलहरूले गठबन्धन बनाएर चुनौती दिएका छन् । विपक्षी गठबन्धनबाट बिहारमा नीतिश कुमारको



जनता दल युनाइटेडको बहिर्गमन, पश्चिम बङ्गालमा तृणमूल कङ्ग्रेसकी नेतृ ममता बनर्जी एक्लै चुनावी मैदानमा उत्रेपछि विपक्षी गठबन्धनबीच कसिलो सहकार्य हुन सकेन ।

पछिल्लो दश वर्ष मोदीका कारण भाजपाले बहुमत ल्याएको कुरामा विवाद छैन । यस पटक पनि मोदीकै लोकप्रियताले भाजपालाई पुनः सत्तारूढ बनाउँदै छ । भाजपा सन् १९८० मा स्थापना भएको पार्टी हो । भारतीय स्वतन्त्रता सङ्ग्रामको नेतृत्व गरेको र लामो समय सत्ता चलाएको पार्टी भएर पनि पछिल्ला वर्षहरूमा कङ्ग्रेस कमजोर बनेको छ । यो पार्टी सन् १८८५ मा गठन भएको थियो ।

मोदीले प्रधानमन्त्रीका रूपमा पहिलो कार्यकाल सम्हाल्दा विश्वको १०औँ स्थानमा रहेको भारतको अर्थतन्त्र अहिले पाँचौँ ठूलो अर्थतन्त्र बन्न सफल भएको छ । मोदीले यो चुनाव जिते विश्वको तेस्रो ठूलो अर्थतन्त्र बनाउने वाचा गरेका छन् । ■

# प्राचीन मानिसको साथी फ्याउरा

प्राचीन कालमा हाम्रा पूर्वजले कुकुर पाल्न सुरु गर्नुअघि फ्याउरा पाल्ने गर्दथे । फ्याउराले पनि कुकुरले जस्तै सुरक्षा दिने गर्थे । खेतीपातीको युगअघि प्राचीन मानिस जङ्गली अवस्थामा थिए । उनीहरूले शिकार, जङ्गली फलफूल र कन्दमूल खाने गर्दथे र त्यही शिकार फ्याउरालाई दिएर पाल्ने गरेको प्रमाण फेला परेको छ ।

दक्षिण अमेरिकामा यसको पुरातात्त्विक प्रमाण भेटिएको छ । त्यहाँ प्राचीन समाजमा फ्याउरालाई निकै पवित्र मान्ने गरिएको अनि मृत्यु भएपछि मानिस र फ्याउरालाई नजिकै गाड्ने गरिएको थाहा भएको छ ।

अर्जेन्टिनाको पाटागोनिआमा १५ सय वर्ष पुरानो चिहानमा एउटा फ्याउरो पनि गाडिएको फेला पर्दा वैज्ञानिकहरू आश्चर्यचकित भएका थिए । त्यो फ्याउरो मानिसको 'प्यारो साथी' वा आफूले पालेको जनावर भएकाले त्यसो गरिएको विश्लेषण गरिएको छ ।

त्यसको डिएनए विश्लेषण गर्दा फ्याउरोले प्रागऐतिहासिक शिकारीहरूसँगै आहारा खाने गरेको र उनीहरूको समूहमै बस्ने गरेको पत्ता लाग्यो ।

"खानेकुराका लागि शिकार र सङ्ग्रह गर्ने मानिसहरूको समूहसँग फ्याउरोको निकट सम्बन्ध भएको देखिने यो निकै दुर्लभ प्रमाण हो," युनिभर्सिटी अफ अक्सफोर्डका डा. ओफेली लेब्रासरले भनेकी छन् ।



'डुसिक्योन एभस' प्रजातिको त्यो फ्याउरो मध्यम आकारको र १०–१५ केजी तौलको हुने विश्वास गरिएको छ तर पाटागोनिआमा घरपालुवा कुकुर आइपुगेको केही सय वर्षपछि अर्थात् आजभन्दा झन्डै पाँच सय वर्षअघि त्यो प्रजाति मासियो । एक दशकअघि अर्जेन्टिनाको अर्को भागमा अझ पुरानो चिहानमा सोही प्रजातिको फ्याउरोको कङ्काल फेला परेको थियो । दक्षिण अमेरिकामा अहिले पनि १० प्रजातिका फ्याउरा छन् । ■

## महिनाको खेलाडी

**सद्भाव आचार्य (गल्फ खेलाडी)**

गल्फ विश्वमा बढी खेलिने खेलमध्ये एक हो भन्दा आश्चर्य लाग्न सक्छ । यथार्थ यही हो गत वर्ष एचएसबीको रिपोर्ट अनुसार विश्वमा आठ करोड गल्फर थिए ।

विश्वमा आठ करोड, एसियामा मात्र ६० लाखको हाराहारीमा गल्फ खेलाडी भए पनि नेपालमा गल्फ खेल्ने खेलाडीको सङ्ख्या मुस्किलले एक हजार जति छ । नेपालमा विगतमा लामो समय राणा परिवार, राजपरिवार र विदेशी कूटनीतिक नियोगका व्यक्तिमा गल्फ खेल सीमित रह्यो । अहिले पनि नेपालमा गल्फ धनाढ्य र व्यापारीको मात्र खेल भनिन्छ । यद्यपि सोही खेलमा विश्वमै नेपालको नाम राख्ने लक्ष्य लिएर एक किशोर गल्फर होमिएका छन् । उनको नाम हो सदभाव आचार्य ।



सदभाव एमेच्योर नेपाली गल्फर हुन् । उनी उमेरले १७ वर्ष पुगे तर उनी अहिले नै घरेलु गल्फको मानचित्रमा सबैले चिन्ने नाम भइसकेका छन् । एमेच्योर भए पनि व्यावसायिक गल्फ प्रतियोगितामा सदभाव अहिले उपाधिको दाबेदारका रूपमा रहन्छन् । यस सत्रमा मात्र उनले तीन उपाधि जितिसकेका छन् ।

सदभाव १६ वर्षमै सेन्ट्रल ओपन जितेर सूर्य नेपाल गल्फर टुरको कान्छो च्याम्पियन बनेका थिए । त्यसपछि एमेच्योर सदभावले सूर्य नेपाल एनपिजिए टुर च्याम्पियनसिप र हालै सूर्य नेपाल गल्फ टुर २०२३–२४ अन्तर्गतको छैटौं प्रतियोगिता, सूर्य नेपाल एनपिजिए टुर च्याम्पियनसिपको उपाधिमा पनि आफ्नो नाम लेखाए ।

केही दिन मात्र भयो सदभाव फाल्डो जुनियर टुर नेपालको उपाधि जितेर फाल्डो सिरिज एसिया फाइनलमा छनोट हुन सफल भएको । अब सदभावले भियतनामको लगुना लाङमा हुने फाल्डो सिरिज एसिया ग्रान्ड फाइनलमा खेल्ने छन् ।

त्यसैले पनि सदभावलाई नेपाली गल्फमा चमत्कार गर्न सक्ने खेलाडीका रूपमा लिइएको छ । सदभावले चार वर्षदेखि गल्फ खेल्न सुरु गरेका हुन् । उनका बुवा दीपक आचार्य आफ्नो समयका सफल व्यावसायिक गल्फर मात्र होइनन् गल्फ निर्देशक, गल्फ विज्ञ र प्रशिक्षक पनि हुन् । आफ्ना बुवासँग फुर्सदमा गल्फ कोर्स जाने क्रममा सानैमा उनलाई यस खेलले आकर्षित गऱ्यो ।

सुरुमा रमाइलोका लागि गल्फ खेलेका सदभावले अझ बुझ्दै जाँदा यस खेललाई आफ्नो क्यरियर बनाउने सोचाइ बनाए । सदभावका अनुसार बुवा दीपकले टाइगर उड्सले खेलेको भिडियो देखाएपछि उनी अझ प्रोफेसनल गल्फर बन्न प्रेरित भएका हुन् । उनका आदर्श खेलाडी पनि टाइगर उड्स हुन् ।

सदभावले १४ वर्षको उमेरमा पहिलो पटक सूर्य नेपाल गल्फ टुर खेलेका थिए । त्यसपछि उनले लगातार यो गल्फ टुरमा खेलिरहेका छन् । सन् २०२२ मा भारतको बेङ्गलोरमा रहेको तरुण सरदेसाई गल्फ एकेडेमीमा प्रशिक्षण लिएपछि पनि सदभावको गल्फ खेल्ने क्षमतामा धेरै वृद्धि भएको छ ।

बङ्गलादेश एमेच्योर च्याम्पियनसिपको पुरुष टिम इभेन्ट, नेपाल टुरिजम कप, नवौं राष्ट्रिय खेलकुदमा त्रिभुवन आर्मीका लागि स्वर्ण र व्यक्तिगतमा रजत पदक सदभावका केही अन्य उल्लेखलायक उपाधि हुन् । सदभावले अस्ट्रेलियाको मेलबर्नमा एसिया प्यासिफक एमेच्योर च्याम्पियनसिप र सिङ्गापुर ओपन एमेच्योर च्याम्पियनसिप पनि खेलेका छन् ।

एमेच्योर विधामा उपाधि जित्न धेरै समय नलाग्ने त सबैले अनुमान गरेका थिए तर सदभावले किशोर उमेरमै व्यावसायिकतर्फ पनि तीन उपाधि जितेर अब छिट्टै व्यावसायिक गल्फर बन्ने छाँट देखाइसकेका छन् ।

सदभाव आफ्नो लक्ष्य एसियाली खेलकुद र ओलम्पिकमा स्वर्ण पदक जित्ने मात्र होइन प्रोफेसन गल्फ प्रतियोगितामा धेरैभन्दा धेरै उपाधि जित्नु रहेको बताउँछन् । सानै उमेरमा उनले हासिल गरेको उपलब्धि, उनको प्रतिभा र बुवाको उचित मार्गदर्शनले सदभावको सपना पूरा नहोला भन्न सकिन्न । ■

*–प्रजित शाक्य*

# क्रिकेटमा
# मिसन विश्वकप




**नेपाली राष्ट्रिय क्रिकेट टिम यतिबेला अमेरिकामा रहेको छ । अमेरिका र वेस्ट इन्डिजको संयुक्त आयोजनामा यही जेठ २० गते टी–२० विश्वकप क्रिकेट सुरु हुने छ । नेपालले दोस्रो पटक टी–२० विश्वकप खेल्ने छ ।**




■ सोमराज पोखरेल


नेपालले अमेरिका जानुअघि घरेलु मैदानमा वेस्ट इन्डिजको 'ए' टिमसँग पाँच खेलको टी–२० शृङ्खला खेलेको थियो । पहिलो पटक नेपाल आएको वेस्ट इन्डिजका खेलाडीमा तीन जना यो विश्वकपमा खेल्ने छन् । रस्टन चेजको कप्तानीमा नेपालमा आएका खेलाडी नेपाली खेलाडीभन्दा अग्ला र ज्यान खाइलाग्दा थिए । उनीहरूबाट नेपाली खेलाडीले राम्रो अभ्यास गरेको भन्न सकिन्छ । यद्यपि घरेलु मैदानमा नेपाली टिमले गरेको तयारी भने सन्तोषजनक छैन ।

नेपालले शृङ्खला ३–२ ले गुमायो । पहिलो र अन्तिम खेल जितेको नेपालले बीचका तीन खेल लगातार हारेको थियो । यही शृङ्खलामा गरेको प्रदर्शनलाई समेत आधार बनाएर नेपाली टिमको छनोट गरियो । यस शृङ्खलामा नेपालका कप्तान रोहित पौडेलले मात्र ब्याटिङमा छाप छोड्न सके ।

नेपालले पहिलो खेल चार विकेटले तथा अन्तिम खेल छ विकेटले जित्यो । नेपालले दोस्रो खेल १० रनले, तेस्रो खेल ७६ रनले र चौथो खेल २८ रनले गुमायो ।

तुलनात्मक रूपमा नेपाली टिमले अभ्यास गर्ने मौका भने राम्रोसँग पायो। केवल सकारात्मक नतिजा मात्र नआएको हो। वेस्ट इन्डिजसँग खेल्नुअघि नेपालले ओमानमा भएको एसिसी प्रिमियर कप टी–२० क्रिकेट प्रतियोगिता खेल्यो। यो प्रतियोगिता भने नतिजाका हिसाबले नेपालका लागि सुखद रहेन।

**एसिसी प्रिमियर कप** : १० टिम सहभागी प्रतियोगितालाई दुई समूहमा विभाजन गरेर खेलाइएकोमा नेपालले पाँच टिम सहभागी एउटा समूहबाट सबै खेल जितेर सेमिफाइनलमा स्थान बनायो तर सेमिफाइनलमा नेपाल युएईसँग पराजित भयो। तेस्रो स्थानका लागि भएको भिडन्तमासमेत नेपालले हार बेहोरेर चौथो स्थानमा समेटियो। यतिसम्म कि नेपालले समूह चरणमा पराजित गरेको हङकङका अगाडि चौथो स्थानको भिडन्तमा पराजय भोग्नु पर्‍यो।

नेपालले उपाधि जितेको भए एसिया कपमा र तेस्रो स्थानसम्म ओगटेको भए एसिसी इमर्जिङ टिम्स एसिया कपमा छनोट हुन पाउने थियो। दुवै छनोटमा नेपाल असफल भयो।

नेपाल तेस्रो स्थानको भिडन्तमा हङकङसँग चार विकेटले पराजित भयो। सेमिफाइनलमा नेपाल युएईसँग छ विकेटले पराजित भएको थियो। यसअघि नेपालले युएईलाई नै पराजित गरेर एसिया कप खेल्न पाएको थियो भने युएईसँग हारेरै नेपाल एसिया कप खेल्नबाट वञ्चित भयो। समूह चरणमा भने नेपालले शानदार खेल खेल्यो। नेपालले साउदी अरबलाई छ विकेटले, हङकङलाई आठ विकेटले, कतारलाई ३२ रनले तथा मलेसियालाई पाँच विकेटले हराएको थियो।

कतारविरुद्धको खेलमा त दीपेन्द्रसिंह ऐरीले कीर्तिमान बनाए। उनले एकै ओभरमा ६ छक्का हानेर कीर्तिमान बनाएका थिए। उनले २१ बलमा अविजित रहँदै ६४ रन जोड्ने क्रममा सात छक्का प्रहार गरे। उनी यो कीर्तिमान छुने विश्वका तेस्रो खेलाडी हुन्।

टी–२० अन्तर्राष्ट्रिय क्रिकेटमा यसअघि भारतका युवराज सिंहले

**अभ्यासका क्रममा भारतले गुजरात क्रिकेट एसोसिएसनको टिम र बरोडा क्रिकेट एसोसिएसनको टिमसँग एमएमएस फ्रेन्डसिप कप क्रिकेट प्रतियोगिता खेल्यो।**



इङ्ग्ल्यान्डविरुद्ध सन् २००७ को विश्वकपमा छ छक्का हानेका थिए। त्यस्तै वेस्ट इन्डिजका केरन पोलार्डले सन् २०२१ मा श्रीलङ्काविरुद्ध एकै ओभरमा छ छक्का प्रहार गरेका थिए। यस्तै एकदिवसीय विश्वकपमा सन् २००७ मा दक्षिण अफ्रिकाका हर्सेल गिब्सले नेदरल्यान्ड्सविरुद्ध पनि एकै ओभरमा ६ छक्का प्रहार गरेको कीर्तिमान पनि छ।

यसअघि दीपेन्द्रले चीनको हाङझावमा १९औँ एसियाली खेलकुदमा मङ्गोलियाविरुद्ध नौ बलमै अर्धशतक बनाउने क्रममा लगातार छ छक्का प्रहार गरेका थिए तर त्यो एकै ओभरमा भने सम्भव भएको थिएन।

एसिसी प्रिमियर कपअघि नेपालले पहिलो पटक भारतमा अभ्यास खेल खेलेको थियो। अभ्यासका क्रममा भारतले गुजरात क्रिकेट एसोसिएसनको टिम र बरोडा क्रिकेट एसोसिएसनको टिमसँग एमएमएस फ्रेन्डसिप कप क्रिकेट प्रतियोगिता खेल्यो। नेपालले दुई टिमसँग समान दुई खेल खेलेर शीष दुई टिमबीच उपाधिका लागि भिडन्त हुँदा नेपालले फाइनलमा गुजरातलाई १८ रनले हराएको थियो।

## विश्वकपमा नेपाल

नेपाल दोस्रो पटक विश्वकप टी–२० क्रिकेट प्रतियोगितामा चयन हुन सफल भएको छ। काठमाडौँमा भएको विश्वकप टी–२० को एसिया छनोट अन्तर्गत प्रतियोगिताको फाइनलमा पुगेसँगै नेपाल दोस्रो पटक विश्वकपमा चयन भएको थियो। फाइनलमा खेल्ने नेपाल र ओमान विश्वकपमा पुगे। नेपालले सेमिफाइनलमा चिरपरिचित प्रतिद्वन्द्वी युएईलाई आठ विकेटले हराएर फाइनलमा ठाउँ बनाइसकेको थियो।

युएईलाई नै हराएर नेपालले एकदिवसीय मान्यता कायम गरेको थियो भने युएईलाई नै हराएर नेपालले पहिलो पटक एसिया कप क्रिकेट खेल्न पायो। अहिले फेरि युएईलाई नै हराएर नेपालले दोस्रो पटक टी–२० विश्वकप खेल्न पाएको हो। नेपालले पहिलो पटक सन् २०१४ को बङ्गलादेश टी–२० विश्वकप खेलेको थियो।

आसन्न विश्वकपमा २० टिमले सहभागिता जनाउँदै छन्। वरीयता प्राप्त १२ टिमले स्वतः विश्वकपमा ठाउँ बनाएका हुन् भने बाँकी आठ टिम नेपाल र ओमान जस्तै छनोट चरण पार गरेर विश्वकपमा पुगे। स्वतः छानिएका १२ टिममा आयोजकका हिसाबले अमेरिका र वेस्ट इन्डिज रहेका छन्। त्यस्तै सन् २०२२ को विश्वकपका शीर्ष आठ टिम अस्ट्रेलिया, इङ्ग्ल्यान्ड, भारत, नेदरल्यान्ड्स, न्युजिल्यान्ड, पाकिस्तान, दक्षिण अफ्रिका र श्रीलङ्का




रहेका छन्। आइसिसीको वरीयता अनुसार अफगानिस्तान र बङ्गलादेशलाई पनि मौका दिइएको छ।

त्यस्तै एसियाबाट नेपाल र ओमान, अमेरिकाबाट क्यानडा, पूर्वी एसियाबाट पपुवा न्युगिनी, युरोपबाट आयरल्यान्ड र स्कटल्यान्ड तथा अफ्रिकाबाट नामिबिया र युगान्डा छानिएका छन्।

२० टिमलाई चार समूहमा विभाजन गरी खेलाइँदै छ। नेपाल समूह 'डी' मा परेको छ। नेपालको समूहमा बङ्गलादेश, नेदरल्यान्ड्स, दक्षिण अफ्रिका र श्रीलङ्का रहेका छन्। समूह 'ए' मा भारत, पाकिस्तान, अमेरिका, क्यानडा र आयरल्यान्ड रहेका छन्। समूह 'बी' मा अस्ट्रेलिया, इङ्ग्ल्यान्ड, नामिबिया, ओमान र स्कटल्यान्डबीच प्रतिस्पर्धा हुने छ। समूह 'सी' मा न्युजिल्यान्ड, अफगानिस्तान, वेस्ट इन्डिज, पपुवा न्युगिनी र युगान्डा रहेका छन्।

विश्वकपमा नेपालले पहिलो खेल टेक्ससमा जेठ २२ गते नेदरल्यान्ड्ससँग, जेठ २९ गते फ्लोरिडामा श्रीलङ्कासँग, जेठ ३२ गते सेन्ट भिन्सेन्टमा दक्षिण अफ्रिकासँग र असार २ गते सेन्ट भिन्सेन्टमै बङ्गलादेशसँग खेल्ने तालिका रहेको छ।

नेपालले रोहितकुमार पौडेलको कप्तानीमा विश्वकप खेल्दै छ। नेपालको १५ सदस्यीय टिममा रोहितसँगै आसिफ शेख, अनिलकुमार साह, कुशल भुर्तेल, कुशल मल्ल, दीपेन्द्रसिंह ऐरी, ललित राजवंशी, करण केसी, गुल्सन झा, सोमपाल कामी, प्रतिश जिसी, सन्दीप जोरा, अविनाश बोहोरा, सागर ढकाल र कमलसिंह ऐरी रहेका छन्। ■

# खाना र क्यान्सरबीचको सम्बन्ध





■ प्राडा सुमनराज ताम्राकार

पछिल्लो समय बढ्दो शहरीकरण र आर्थिक रूपमा क्रय क्षमतामा सुधारसँगै नेपालीको दैनिकीमा निकै परिवर्तन आएको छ। यस परिवेशमा होटल, रेस्टुराँ, सीमानाका क्षेत्र, खाद्य सामग्रीको उत्पादन, ढुवानी, प्रशोधन तथा बिक्री वितरणको फितलो अनुगमनका कारण नेपालमा आगामी दिनमा क्यान्सरका रोगी बढ्ने निश्चित प्रायः छ। त्यसमाथि अग्रजको पालामा जस्तो अर्गानिक (शुद्ध) खानेकुरा पाउन गाह्रो छ। तिनीहरूको पालामा जस्तो शारीरिक परिश्रमको निकै अभाव छ। मोटोपनासँगै नसर्ने रोग लाग्ने क्रममा क्यान्सर हुन सक्ने जोखिम पनि बढ्छ।

खानपान शैलीमा रेस्टुराँ, होटलमा खान जाने, विवाह, सामाजिक विधि व्यवहारका भोज अधिकतर पार्टी प्यालेसमा हुन थालेका छन्। त्यहाँ स्वास्थ्यका दृष्टिले हुन सक्ने वा भइरहेका गलत अभ्यास छन्। जस्तै तारन्तार उही तेल प्रयोग, खान स्वादिलो बनाउन अजिनोमोटो प्रयोग, घिउ, तेल, नुन मसलालाई अधिक तापक्रममा तताउने, अधिक नुन एवं चिल्लो पदार्थ प्रयोग गरिनु। अर्कोतर्फ अधिकतर ग्राहक वा खानपानका सौखिनको चाहना पनि रातो मासु, चिल्लो, पिरो परेको खाना नै हो।



भुटुवा, रोस्ट वा सेकुवालगायत मासुका परिकार तयार गर्ने क्रममा अत्यधिक तापले मासुमा रहेको प्रोटिन रसायन नाइट्राइट्सबाट हानिकारक नाइट्रोसेमाइनमा परिणत हुन्छ। यसबाट पेटको क्यान्सर  हुन सक्छ। वनस्पति घिउमा वा धेरैबेर र धेरै पल्ट तताएको तेलमा पकाएका खानेकुरामा ट्रान्सफ्याट (अति खराब चिल्लो) हुन्छ। त्यसमाथि १२० डिग्रीभन्दा बढी तापक्रममा धेरै समय तताएको तेलमा क्यान्सर गराउन सक्ने रसायन पोलिसाइक्लिक अरोमेटिक हाइड्रोकार्बन र एल्डिहाइड बन्न जान्छ। मासु मात्र नभई अधिक तापमा तारेर वा भुटेर पकाइने आलु चिप्स, फ्राइड मम, फ्राइड राइसको हकमा पनि यो कुरा लागू हुन्छ।

त्यसो त प्रशोधित खानामा अधिकतर बोसो नै मिसाइएको हुन्छ। स्वास्थ्यका दृष्टिकोणले चिल्लो पदार्थमध्येको ट्रान्सफ्याट सबैभन्दा हानिकारक हुन्छ। जसका कारण स्तन क्यान्सरलगायत कैयौँ नसर्ने खालका स्वास्थ्य समस्या देखा पर्छन्। पिज्जासँगै हल्का पेय पदार्थ पनि पिउने गरेमा मोटोपनाको जोखिम बढ्न जान्छ। यसले गर्दा महिलामा स्तन, डिम्बाशय एवं पाठेघरको क्यान्सरको सम्भावना हुन्छ।

राँगा, भेडा, खसी, बङ्गुरको मासु रातो मासु वर्गमा पर्दछ। रातो मासु स्वास्थ्यको दृष्टिले हानिकारक छ। रातो मासुमा बढी पाइने फलाम तत्त्वले हानिकारक किसिमको अक्सिजन बन्न जान्छ। लामो समयसम्म कोषिकामा अक्सिजनको अभाव भएपछि अनियन्त्रित तवरमा कोष वृद्धि भई क्यान्सरमा विकास हुन्छ। यसरी रातो मासुसँगै बोसोयुक्त खानेकुराले छाती र मुटुको क्यान्सरको जोखिम बढाउँछ। रातो मासुभन्दा किमा, ससेज जस्ता परिवर्तित मासुले बढ्ता हानि पुर्‍याउँछ।

मद्यपानसँगै चुरोट, हुक्का सेवन र सितनका रूपमा उही चिल्लो, बोसोयुक्त खानाको परिकार वा चिप्स, भुजिया खाएमा समग्रमा विभिन्न क्यान्सर लाग्ने जोखिम बढ्न जान्छ। मदिरा वा लागूपदार्थले लट्ठ परेको बखत असुरक्षित यौन सम्पर्क, असुरक्षित सुई साटासाट अनि सरसफाइको अभावमा सङ्क्रामक रोगसँगै पाचन प्रणाली र जननेन्द्रीयको क्यान्सरको जोखिम बढ्छ।

विश्वमा हरेक छमध्ये एउटा क्यान्सरको कारक तत्त्व सङ्क्रमण नै हो। त्यसमध्ये पनि एचपिभी, हेलिकोब्याक्टर पाइलोरी, हेपाटाइटिस बी एवं सी भाइरस गरी चार प्रकारका सङ्क्रमण बढी जिम्मेवार छन्। यी सङ्क्रमणले पाठेघरको मुख, आन्द्रा, आमाशय, कलेजोको क्यान्सरको जोखिम बढाउँछन्।

आगोमा कालो हुने गरेर पोलेको मकैमा कार्बनयुक्त तत्त्व हुन्छन्। पटक पटक दूध उमाल्दा पिँधमा जमेको डढेको दूध वा कुराउनी पनि कार्बनमा परिणत हुन्छ। चुलोबाट निकालेको दुई मिनेटभित्र तात्तातो चिया पिउने व्यक्तिमा घाँटीको तथा खाद्य नलीको क्यान्सर हुने जोखिम पाँच गुणाले बढ्छ। बासी र सडेगलेका खानेकुरामा ढुसी हुन्छ। यस्ता खानेकुरा खाएमा पेटको क्यान्सर हुन सक्छ। बासी





खाना वा ढुसी परेका खानाले कलेजो र आमाशयको क्यान्सरको जोखिम बढ्छ।

चाउचाउ वा अन्य स्वादिला जङ्क फुडमा अजिनोमोटो तथा दालमोठ कुरकुरे, चिप्स जस्ता अधिक नुनिलो खानेकुरा, बन्द (बट्टामा प्याक) गरिएका र मिठाईका परिकारमा मिसाइएको अखाद्य रङले पाचन नलीको क्यान्सर निम्त्याउने खतरा रहन्छ। खाना पकाउने, तयार पार्ने तथा लामो समय भण्डारण गर्ने अस्वस्थ विधिले स्वस्थ खाद्यवस्तुलाई पनि क्यान्सर गराउने बनाइदिन्छ। आँप तथा फलफूल पकाउन प्रयोग गरिने कार्बाइड तथा माछालाई लामो समय सड्न नदिन प्रयोग गरिने फर्मालिनका कारण छाला तथा पाचन प्रणालीको जोखिम हुन्छ।

## रोकथाम र नियन्त्रण

यसो हेर्दा केही पनि खानु नै भएन, पिउनु नै भएन जस्तो लाग्छ तर कुरा त्यस्तो होइन। खानेकुराको छनोट र पकाउने तरिकामा अलिकति होसियारी अपनाए धेरैजसो खाना फाइदाजनक बन्न जान्छन्। उमालेको वा उसिनेको खानेकुरा खानु राम्रो एवं स्वस्थकर हुन्छ। बट्टा वा सिसीको जुस पिउनुभन्दा नियमित रूपमा ताजा फलफूल नै फाइदाजनक हुन्छ। नुन बढी भएको, अधिक बोसोयुक्त, बट्टामा प्याक गरिएका खाद्य सामग्री नखानु नै वेश।

शाकाहारीलाई क्यान्सर लाग्ने सम्भावना ५० प्रतिशत कम हुन्छ। त्यसैले भोजमा वा घरमै पनि गाँजर, मूला, हरियो सागपात, रेशादार तरकारी तथा फलफूल नियमित रूपमा खाँदा क्यान्सरको जोखिम घट्न जान्छ। किनकि ताजा फलफूल तथा सागपातमा एन्टिअक्सिडेन्ट पाइन्छ। खानामा हरिया सागपात तथा फलफूल भएमा ठूलो आन्द्रा तथा मलद्वारको क्यान्सरबाट बच्न सकिन्छ।

**शाकाहारीलाई क्यान्सर लाग्ने सम्भावना ५० प्रतिशत कम हुन्छ। त्यसैले भोजमा वा घरमै पनि गाँजर, मूला, हरियो सागपात, रेशादार तरकारी तथा फलफूल नियमित रूपमा खाँदा क्यान्सरको जोखिम घट्न जान्छ।**

पहेँलो खालका फलफूल, तरकारी, बोक्रासहितको आलु, गहुँ, चना, मकै स्वास्थ्यलाई राम्रो हुन्छ। चोकरसहितको गहुँ, मकै, फापरको पिठोबाट बनाइएका परिकार, रोटी तथा रायो, चम्सुर, पालुङ्गो, बेथे, तोरी, मेथीलगायतका रेशादार खाना स्वस्थकर मानिएको छ। सूर्यमुखी, मकै, भटमास, बदामको तेल बढी फाइदाजनक हुन्छ। उमेर पुगिसकेका मानिसले मल्टिभिटामिनका साथै बिटा केरोटिन, जिङ्क, सेलेनियमयुक्त खाना खानु राम्रो हुन्छ। त्यसैले सुन्तला, काउली, ब्रोकाउली, केरा, सागपात, गाँजर खाएमा क्यान्सरबाट जोगिन मद्दत पुग्छ।

माछा, सेतो मासु, पन्छीको मासु, कुखुराको मासु खानु राम्रो हुन्छ। त्यो पनि एकदिनमा बढीमा सय ग्राम मात्र। तुलनात्मक रूपमा रातो मासु कम खाने गरेमा क्यान्सरले पुरुष र महिलाको मृत्युदरमा क्रमशः ११ र १९ प्रतिशतले कमी आउने रहेछ। त्यसैगरी परिवर्तित मासु खाने पुरुषको मृत्युको जोखिम १६ प्रतिशत र महिलाको मृत्युको जोखिम २५ प्रतिशत कम हुन्छ। त्यसो भएर मासु नै खानु हुन्न भन्ने होइन तर रातो मासु र परिवर्तित मासु कम खानु बुद्धिमानी हुन्छ।



बढ्ता प्रशोधित नगरिएका खानेकुरा स्वस्थकर नै हुन्छन्। खानाकै कारण क्यान्सर हुने मात्र होइन छनोट गरेर तथा मिलाएर खान जानेको खण्डमा खानामा पाइने तत्त्वले क्यान्सरबाट बचाउँछ पनि। यसरी खाना र क्यान्सरबीच घनिष्ठ सम्बन्ध छ। के, कसरी र कति बेला खाने भन्ने पनि उत्तिकै महत्त्वपूर्ण छ। पानी बढी पिउनाले शरीरमा रहेका हानिकारक तत्त्व पिसाबबाट सजिलै बाहिरिने भएकाले क्यान्सरको जोखिम कम हुन्छ। सुर्ती, चुरोट तथा मद्यपान सेवन गर्नु हुँदैन।

विकासोन्मुख तथा विकासशील देशमा सङ्क्रामक रोग व्याप्त हुँदै गएकाले रोकथाम गर्न सकिने खालका सङ्क्रमणलाई बेलैमा ठेगान लगाउनु पर्दछ। क्यान्सर तुलनात्मक रूपमा उपचार गर्न सकिने भए पनि यसबाट प्रभावित व्यक्तिले मात्र नभई परिवारले पनि दुःख, कष्ट भोग्नुपर्ने हुन्छ।

यसैले खाना खाने बानीमा ध्यान दिई रोकथामतिर लाग्नु नै बुद्धिमानी हुन्छ। हाडजोर्नी सुन्निने समस्या (आर्थाइटिस), मुटुको समस्यालगायत धेरै थरीका समस्यामा प्रयोग गरिने एस्पिरिनको सेवनले घाँटीको क्यान्सरका साथै खाद्यनली अन्तर्गत ब्यारेट्स इसोफागसको क्यान्सरको खतरा कम गर्न मद्दत गर्दछ। बाह्य औषधि वा खानाको माध्यमबाट पाएको भिटामिन ईले एन्टिअक्सिडेन्टका रूपमा काम गरी डिएनएमा हुने क्षति रोकी क्यान्सर हुनबाट जोगाउँछ।



त्यसैगरी ब्रोकाउलीमा पाइने सल्फोराफेन (शक्तिशाली फाइटोकेमिकल) तत्त्वले स्तन क्यान्सर फैलिन दिँदैन।

## सारांश

क्यान्सर हुन सक्ने यति धेरै प्रतिकूल वातावरणमा रहेको भए पनि हाम्रो अहोभाग्य भन्नुपर्दछ हाम्रो खानापानमा बेसार, जिरा, मरिच, टिमुर, जाइफल, दालचिनी जस्ता मसलाका साथै लसुन, धनियाँ, अदुवा पनि हुन्छ। यिनले समेत क्यान्सर हुनबाट धेरै जोगाएका छन्। नियमित रूपमा काँचो लसुन खाने गरेमा फोक्सोको क्यान्सर हुने जोखिम आधा कम हुन्छ। त्यसैगरी आन्द्राको ट्युमर पनि एक तिहाइले कम हुने देखिएको छ। बेसारमा पाइने करक्युमिन विषाणुविरोधी हुनुका साथै यसले एचपिभी (पाठेघरको मुखको क्यान्सर गराउने मुख्य कारक विषाणु)सँग लड्न सक्ने क्षमता बढाउँछ। यी त केही उदाहरण मात्र हुन्। हाम्रा मसला सबैमा औषधीय गुण रहेको छ। ■

| | |
|---|---|
| फाउ : | चिजबिज किनेपछि सित्तैमा मागेर लिइने वस्तु, फोसा, तासा |
| फाटक : | कुनै भवनमा पस्ने बाहिरी ढोका, गेट |
| फाकट : | फैलिएको, फराक |
| सजना : | सखी, साथी |
| जन्नत : | स्वर्ग |
| विजनावास : | एकान्तवास |
| आवर्जना : | कसिङ्गर, फोहोर |
| जनकतनया : | सीता |
| जन्मगामी : | बाँचुन्जेल |
| जन्तुशाला : | चिडियाघर |
| रहजनिया : | एकान्तमा ढुकेर डकैती गर्ने लुटेरा |
| पाजलो : | एकदमै सुन्दर |
| परजाया : | परस्त्री |
| पुइजू : | फुपू |
| माप : | नाप्ने उपकरण |
| माचो : | कुनै कामको बढ्ता चाप |
| समाकर्षण : | उचित आकर्षण |
| मुहारिका : | फेसबुक |

| | |
|---|---|
| Doss | खटिया, पलङ |
| Dung | गोबर, विष्ठा |
| Plaza | चोक, बहाना |
| Ecstatic | भावविभोर, उन्मत्त |
| Colossal | विशाल, प्रचण्ड |
| Behold | हेर्नु, अवलोकन गर्नु |
| Mischievous | दुष्ट, शैतान |
| Peep | लुकेर हेर्नु, झलक |
| Repent | पछुताउनु, पश्चात्ताप |
| Grind | पिस्नु, घर्षण |
| Exploit | शोषण, कर्तुत |
| Ardent | तीव्र, प्रचण्ड |
| Bombastic | आडम्बरपूर्ण |
| Earmark | छाप, तय गर्नु |
| Dearth | अकाल, अभाव |
| Habitude | स्वभाव, लगन |
| Bookish | किताबी, अव्यावहारिक |
| Strive | प्रयत्न गर्नु, सङ्घर्ष गर्नु |
| Urn | सुराही, कलश |
| Vex | सताउनु, कष्ट दिनु |
| Chide | सुनाउनु, धम्काउनु |

## BASIC GRAMMAR
### (PRONOUNS)

| SUBJECT | OBJECT | POSSESSIVE ADJECTIVE | POSSESSIVE PRONOUNS |
|---|---|---|---|
| I | me | my | mine |
| You | you | your | yours |
| We | us | our | ours |
| They | them | their | theirs |
| He | him | his | his |
| She | her | her | hers |
| It | it | its | ??? |

## ब्रेन गेम



यस चित्रमा ह्यामर खोज्नुहोस् ।

## प्रश्न

मानौँ तपाईं बसमा १० जनासँग यात्रा गरिरहनुभएको छ । पहिलो बस बिसौनीमा दुई जना ओर्लिए र चार जना बसमा चढे । दोस्रो बिसौनीमा पाँच जना ओर्लिए र दुई जना चढे । त्यसपछिको बिसौनीमा दुई जना ओर्लिए र तीन जना चढे । अब भन्नुहोस् बसमा कति जना यात्रा गरिरहेका छन् ?

यस चित्रमा कालो थोप्ला भएका वृत्त कति छन् ।





यस चित्रमा अङ्ग्रेजीमा के लेखिएको छ ।

उत्तर यसै अङ्कमा





यस चित्रमा गल्ती पत्ता लगाउनुहोस् ।



यस चित्रमा बिरालो खोज्नुहोस्।

# परिणामहरू

## अङ्कजाल प्रतियोगिता, जेठ-२०८१

**नियमहरू :**

१. अङ्कजाल भर्न खाली कोठाहरूमा १ देखि ९ अङ्कसम्म भर्नुपर्नेछ।
२. प्रत्येक ठाडो लहर र तेर्सो लहरमा १ देखि ९ अङ्कसम्म भर्नुपर्नेछ।
३. अङ्कजालमा ३×३ का नौवटा वर्ग रहेका छन्। ३×३ को प्रत्येक वर्गमा पनि १ देखि ९ अङ्कसम्म नदोहोऱ्याई भर्नुपर्नेछ।
४. समाधान २०८१ असार १५ सम्ममा 'युवामञ्च' को कार्यालयमा आइपुगिसक्नुपर्नेछ।
५. अङ्कजाल भरेर पठाउँदा यसै पत्रिकाको कटिङ पठाउनुपर्नेछ। केरमेट र अस्पष्ट समाधानलाई प्रतियोगितामा सहभागी गराइने छैन।
६. सही समाधान पठाउने दुई जनालाई सात-सात सय रुपियाँ पुरस्कारको व्यवस्था गरिएको छ। दुईभन्दा बढीले सही समाधान पठाएमा गोलाप्रथाद्वारा विजयीको छनोट गरिनेछ।
७. नतिजासम्बन्धी युवामञ्चको निर्णय नै अन्तिम निर्णय हुनेछ।

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| | | ६ | ३ | १ | ८ | २ | | |
| | २ | | | | | | ६ | |
| ९ | | | | ५ | | | | ७ |
| ३ | | | ७ | | ९ | | | ८ |
| १ | | ४ | | ३ | | ९ | | ६ |
| २ | | | ४ | | १ | | | ५ |
| ४ | | | | ८ | | | | २ |
| | ३ | | | | | | ४ | |
| | | २ | ६ | ७ | ४ | ८ | | |

**नाम :** ..........................................

**ठेगाना :** ........................................

## सामान्यज्ञान चैत अङ्कको उत्तर

**समूह क :** १. सृष्टि श्रेष्ठ (२०८०) २. आइकन अफ दी सिज ३. चीन
**समूह ख :** १. एकराजशमशेर र ब्रह्मशमशेर २. म्याग्दी ३. लोकबहादुर थापा
**समूह ग :** १. कान्तिराज्यलक्ष्मीदेवी शाह २. डा. घनश्याम ज्ञवाली ३. माल्दिभ्स
**समूह घ :** १. शोडशु २. राजेन्द्रविक्रम शाह ३. जर्मनी
**समूह ङ :** १. बुखानन ह्यामिल्टन २. बमबहादुर विक ३. त्रिभुवन विश्वविद्यालय
**समूह च :** १. रुबिना क्षेत्री बेलवासे २. दीपु ज्वार्चन ३. बालमजदुरी उन्मूलन
**समूह छ :** १. भीमशमशेर २. मेकियावेली ३. नक्कली डाक्टर पत्ता लगाउन नेपाल प्रहरीद्वारा सञ्चालित अभियान

## अङ्कजाल चैत अङ्कको उत्तर

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| ४ | ९ | २ | ६ | ७ | १ | ३ | ५ | ८ |
| ७ | ८ | १ | २ | ३ | ५ | ४ | ६ | ९ |
| ३ | ५ | ६ | ८ | ४ | ९ | ७ | १ | २ |
| ६ | ३ | २ | ९ | ५ | ८ | १ | ७ | ४ |
| ८ | ९ | ७ | ४ | १ | ३ | ५ | २ | ६ |
| ५ | १ | ४ | ७ | २ | ६ | ८ | ९ | ३ |
| २ | ७ | ३ | ५ | ६ | ४ | ९ | ८ | १ |
| ९ | ४ | ५ | १ | ८ | २ | ६ | ३ | ७ |
| १ | ६ | ८ | ३ | ९ | ७ | २ | ४ | ५ |

### गोलाप्रथाद्वारा विजयी

**वसन्त ताम्राकार**, पनौती
**बुद्धिबहादुर दुरा**, मध्य नेपाल लमजुङ

**सही जवाफ पठाउने सहभागी :**

बुद्धिमान श्रेष्ठ त्रिपुरेश्वर काठमाडौँ, रोजन चालिसे, लालबन्दी सर्लाही, करुणा घिमिरे, काठमाडौँ, सबलकुमार घिमिरे, धनकुटा, निर्मला श्रेष्ठ, विराटनगर, प्रकाश भण्डारी 'विवेक' गैँडाकोट नवलपुर, अनिता गैरे, गैँडाकोट नवलपुर, कल्पना रावल, बर्दिया, मनोज थापा कैलाली, उपान्सु थापा, काठमाडौँ, उमेश थापा प्राइम बैङ्क कमलपोखरी, निर्मला भट्टराई, काठमाडौँ, आलोककुमार तिवारी वीरगन्ज-२६ बिर्ता, किशोर क्षेत्री, धरान, शान्तिकुमारी चौधरी, सिरहा, रितिका कसपाल, पुतलीसडक काठमाडौँ, असीम श्रेष्ठ चिसापानी रामेछाप, शिला श्रेष्ठ कुलेश्वर काठमाडौँ, वटुकृष्ण कसपाल, पुतलीसडक काठमाडौँ, खेमराज घिमिरे कामनपा-९, बिधिराज खनाल, शङ्करदेव क्याम्पस काठमाडौँ, गौरीश्वर रेग्मी, काठमाडौँ, निरु श्रेष्ठ, काठमाडौँ, पञ्चनारायण महर्जन, कीर्तिपुर, लक्ष्मण रेग्मी, काठमाडौँ, अशेष महर्जन, कीर्तिपुर, कृष्णचन्द्र गौतम, सुखीपुर सिराहा, निरव पौडेल काठमाडौँ, मदनमोहनलाल श्रेष्ठ घट्टेकुलो काठमाडौँ, सहाना श्रेष्ठ, न्यूरोड, कविता उप्रेती, माकलबारी काठमाडौँ, दिनेशराज पौडेल, काठमाडौँ, सनिसा महर्जन पाटन, सुन्धारा, सुयोग दुरा मध्यनेपाल लमजुङ, रमिता शाक्य, काठमाडौँ, नारायण लघु, भक्तपुर, सीता महर्जन काठमाडौँ, हरिबहादुर थापा, भक्तपुर, प्रज्ञा वज्राचार्य, खुसिबुँ, दिवस भट्टराई, काठमाडौँ-४।

## चैत अङ्कको कोठेपद

### गोला प्रथाद्वारा विजयी

**लक्ष्मण रेग्मी**, काठमाडौँ
**कविता उप्रेती**, माकलबारी काठमाडौँ

**सही उत्तर मिलाउने अन्य सहभागी**

मदनमोहनलाल श्रेष्ठ घट्टेकुलो काठमाडौँ, शान्तिकुमारी चौधरी लहान सिराहा, रक्षा चौधरी भैँसेपाटी, रत्न शाक्य पुल्चोक ललितपुर, उज्ज्वलविलास वज्राचार्य, नयाँबजार, खेमराज घिमिरे कामनपा-९, दिनेशराज पौडेल, काठमाडौँ, पशुपति कुमाल, अर्घाखाँची, रमा कुमाल बल्कोट अर्घाखाँची, चन्द्रबहादुर मुखिया, गुल्मी, रामप्रसाद उप्रेती, काठमाडौँ, चण्डेश्वरी श्रेष्ठ बनेपा, प्रविना वज्राचार्य, काठमाडौँ, सुयोग दुरा लमजुङ, आलोककुमार तिवारी, पर्सा, नवीन थापा, काठमाडौँ, खगेन्द्र नाथ महेन्द्रनगर, उमेश थापा प्राइम बैङ्क कमलपोखरी, तारा शर्मा अधिकारी, धनकुटा, कल्पना रावल, बर्दिया, उपासना थापा, ललितपुर, उमेशकुमार मास्के, विराटनगर, निर्मला श्रेष्ठ, विराटनगर, कुमारी निर्मला गिरी कञ्चनपुर, बुद्धिबहादुर दुरा मध्य नेपाल लमजुङ।

## सामान्य ज्ञान प्रतियोगिता चैतको परिणाम

| | नाम | ठेगाना | प्राप्त अङ्क |
|---|---|---|---|
| विजेता | राधाकृष्ण श्रेष्ठ | आरुघाट, गोरखा | १०० |
| विजेता | अशेष महर्जन | नगाउँ, कीर्तिपुर | १०० |
| विजेता | खगेन्द्र नाथ | कञ्चनपुर | १०० |
| ४ | पञ्चनारायण महर्जन | कीर्तिपुर | १०० |
| ५ | मदनमोहनलाल श्रेष्ठ | घट्टेकुलो, काठमाडौँ | १०० |
| ६ | प्रशान्त ताम्राकार | पनौती | १०० |
| ७ | रोजन चालिसे | लालबन्दी | १०० |
| ८ | बुद्धिमान श्रेष्ठ | त्रिपुरेश्वर, काठमाडौँ | १०० |
| ९ | सुयोग दुरा | मध्यनेपाल, लमजुङ | १०० |
| १० | शान्तिकुमारी चौधरी | लहान, सिराहा | १०० |

◆ निर्मल

# युवामञ्च कोठेपद प्रतियोगिता, जेठ-२०८१

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| १ | | २ | | ३ | | ४ | | ५ |
| | | ६ | | | | ७ | | |
| ८ | ९ | | | १० | | | | |
| | | | ११ | | | १२ | | |
| १३ | | १४ | | | १५ | | | |
| १६ | | | | १७ | | | १८ | |
| | | १९ | | | | २० | | २१ |
| २२ | | | | २३ | | | | |
| | | २४ | | | | २५ | | |

## सहभागिताका नियम

१. समाधानसहितको कुपन २०८१ असार १५ भित्र आइपुग्नुपर्नेछ ।
२. समाधान माथिको कुपनमै पूरा नाम र ठेगाना भरेर पठाइएको हुनुपर्नेछ ।
३. केरमेट गरिएका समाधानलाई प्रतियोगितामा समावेश गरिने छैन ।
४. सही समाधान पठाउने दुई जनालाई सात-सात सय रुपियाँ पुरस्कारको व्यवस्था गरिएको छ । दुईभन्दा बढी व्यक्तिले सही समाधान पठाएमा गोलाप्रथाद्वारा विजयीको छनोट गरिनेछ ।
५. नतिजासम्बन्धी युवामञ्चको निर्णय नै अन्तिम निर्णय हुनेछ ।

**नाम :** ..................................

**ठेगाना :** ..................................

..................................

### ठाडो :

१. लिखितको विपरीतार्थक शब्द
२. कुनै काम, कुरो गर्न निषेध, रोक
३. मदिरा आदि नशालु पदार्थ खाई लट्ठ परेको/घमण्डले मातेको, उन्मत्त
४. शान्ति, सुरक्षा कायम गर्न उसकै घरमा नियन्त्रण
५. भयानक, डरलाग्दो, खतरा भएको
९. एकथरी ओछ्याउने वस्तु, काम्लो
११. पाकेको घाउबाट निस्कने एक प्रकारको तरल पदार्थ
१३. पुर्खौंदेखि पूजा गरिएका देवता/देवालीमा पूजा गरिने देवता
१४. भारतको आगरामा रहेको विश्व प्रसिद्ध कलात्मक भवन
१५. खाद
१७. हावा चल्दाको किसिम
१८. पसले, दुकानदार
२०. दैत्य, असुर
२१. तरकारी, अचार आदिमा हालिने मसलाविशेष/एकथरी कन्द वा त्यसको बोट

### तेर्सो

१. पृथ्वीको कुनै भागको जलवायु वा त्यसको स्थिति (सर्दी, गर्मी, मनसुन आदि)
३. खाँबाहरू गाडेर अग्लो पारी पराल आदि राख्न बनाइएको टाँड, माच, टौवा
६. एक प्रसिद्ध ऋषि/छुल्याहा, पोल्याहा
७. मान्छेको समूह, गुट
८. तरकारी आदि पकाउन प्रयोग गरिने एकथरी भाँडो
१०. मीठो, मधुमय, मृदु
११. दाहिने फोक्सो र कलेजोको बीचमा रहने, खानेकुरा पचाउने तीतो रस/लेदो पदार्थ अलिकत्ति निस्कँदाको किसिम (मात्रा)
१२. डुङ्गा खियाउने साधन, पतवार
१४. उष्णता, तातोपन, ज्वर
१५. धीमा, अल्प, मत्थर
१६. बोली, वचन, वाक्य
१७. ऊनको ओढ्ने खास्टो/दोसल्ला
१९. ज्योतिषशास्त्र अनुसार १२ राशिमध्ये एक राशि
२०. सिद्धार्थ गौतमका पुत्र
२२. पुराण अनुसार भगवान् विष्णुका एक अवतार
२३. सामुन्ने, अगाडि
२४. प्राणीको लाम, ताँती, लर्को
२५. साइतमा लगिने फलफूल, दही आदिको कोसेली/शुभवस्तु

## कोठेपद प्रतियोगिता, चैत अङ्कको उत्तर

# तपाईंको प्रश्न

## ज्यो. हरिप्रसाद पौडेलको उत्तर

नाम : रामकुमारी कार्की
जन्म स्थान : विराटनगर, रङ्गेली
जन्म मिति : २०६८।२।९
जन्म समय : बिहान ९:५१ बजे

मेरो नातिको वर्तमान ग्रहदशाका, भाग्य, स्वास्थ्य, आयु र विद्यासम्बन्धी विषयको ज्योतिषीय जानकारी लिन चाहन्छु ।

नातिको जन्म मघा नक्षत्रको पहिलो चरणमा भएकाले सिंह राशि पर्दछ । चिनामा ग्रहयोग बलिया रहेका छन् । विशेषगरी कर्मक्षेत्र बलियो देखिएकाले भविष्यमा राम्रो काम गरेर नाम राख्ने योग रहेको छ । साहस अनि पराक्रम राम्रो छ । शारीरिक आरोग्यताका साथै दीर्घायुको योग रहेको छ । भविष्य सुखमय आनन्दमय देखिन्छ । अनुशासित जीवनशैलीका साथै चारित्रिक गुण राम्रो लिएर आएका छन् । वर्तमान समयमा भने सङ्कटा दशा चलेकाले पढाइमा सामान्य बाधाअड्चन देखिन्छ । सङ्कटाको शान्ति गराएमा दोष कम भएर जाला । १८ वर्ष उप्रान्त भाग्योदयको योग छ । पढाइमा उच्च सफलता मिल्ने ग्रहयोग रहेको छ । चरलग्नमा जन्म भएकाले विदेशमा भाग्योदयको योग छ । भाग्य राम्रो लिएर जन्मेकाले भविष्य समुज्ज्वल छ ।

---

नाम : सत्येन्द्र रानाभाट
जन्म स्थान : पोखरा, महेन्द्रपुल
जन्म मिति : २०५७ जेठ ९ गते
जन्म समय : बिहान ९:२० बजे

समग्रमा मेरो भाग्य, भविष्य, वर्तमान ग्रहगोचरसम्बन्धी फल बताइदिनुहुन अनुरोध गर्दछु ।

तपाईंको जन्म विशाखा नक्षत्रको प्रथम चरणमा पर्न गएकाले तुला राशि पर्दछ । वर्तमान समयका ग्रहदशा राम्रै रहेका छन् । चिनामा गजकेशरी योग रहेकाले साहस अनि आत्मबल अजस्र देखिन्छ । भविष्यमा उच्च आर्थिक सफलता मिल्ने छ । विद्या अनि विनयता र बोलीवचन जस्ता चारित्रिक गुण राम्रा छन् । नोकरी नै जीविकोपार्जनको प्रमुख आधार हुने देखिन्छ । २७ वर्षपछि नोकरीका लागि ढोका खुला हुने छ । नोकरीमा पदप्रतिष्ठा बढ्दै जाने छ । प्रयास गरेका कार्यमा सफलता मिल्दै जाने देखिन्छ । स्वदेश या विदेशमा चौतर्फी सफलताको समय प्रारम्भ भएको छ । समयको सदुपयोग गरेर अगाडि बढेमा भविष्य सुखमय देखिन्छ । वर्तमान समयमा खुब लगनशील भएर अध्ययनमा लाग्नुहोस् उज्ज्वल भविष्य तपाईंको अगाडि छ ।

---

नाम : इन्द्रकुमारी कार्की
जन्म स्थान : धरान, पिण्डेश्वर
जन्म मिति : २०६९।१२।७ गते
जन्म समय : बिहान ८:५१ बजे

मेरो नातिनीको आयु, आरोग्यता, भाग्य, भविष्य, विद्या र वर्तमान ग्रहदशाको बारेमा जानकारी लिन चाहन्छु ।

नातिनीको शारीरिक आरोग्यताका साथै दीर्घायुको योग रहेकाले यससम्बन्धी चिन्ता गर्नुपर्ने कुनै कारण छैन । भाग्य राम्रो लिएर जन्मेकाले भविष्यमा उच्च सफलता मिल्ने सम्भावना रहेको छ । १९ वर्ष पुगेपछि भाग्योदयको योग रहेको छ । वर्तमान समयमा उल्कादशा चलेकाले पढाइमा त्यति मन गरेको देखिन्न । सामान्य अस्वस्थताको समेत सम्भावना देखिन्छ । उल्कादशाको शान्ति गराएमा दोष कम भएर जाला । स्थिर लग्नमा जन्म भएकाले विदेशभन्दा स्वदेशमा नै राम्रो सफलता मिल्ने देखिन्छ । बौद्धिक क्षमताका साथै आर्थिक पक्षका काममा समेत राम्रो सफलता मिल्ने ग्रहयोग रहेको छ । भविष्यमा असल नागरिक भएर देश र समाजको सेवा गर्ने योगसमेत रहेको छ ।

---

न्वारनको नाम : हरि श्रेष्ठ
जन्मस्थान : काठमाडौँ, न्हैकन्तला
जन्म मिति : सन् २००३ जुन ६ तारिख
जन्म समय : बिहान ११:४५ बजे

मेरो वर्तमान ग्रहदशा, जीवनवृत्ति र भविष्यका बारेमा बताइदिनुहुन अनुरोध गर्दछु ।

वर्तमान समयमा सिद्धादशा प्रारम्भ भएकाले स्वदेश अनि विदेश चौतर्फी सफलता मिल्ने समय छ । लगनशीलताका साथ आफ्नो पढाइमा मन लगाउनुहोस् सोचे अनुसारको सफलता मिल्ने छ । आगामी ५ वर्षका लागि ग्रहदशा राम्रो देखिएकाले पढाइका साथै जागिरमा समेत राम्रो सफलता मिल्ने देखिन्छ । भाग्य राम्रै देखिएकाले भविष्य सुखमय देखिन्छ । आर्थिक क्षेत्रका काममा राम्रो सफलताको योग छ । सामाजिक मानसम्मानका साथै पदप्रतिष्ठासमेत बढेर जाने छ । वर्तमान समयमा चलेको सिद्धा दशाका कारण मानसिक चञ्चलता केही बढेको देखिन्छ । प्रेम एवं मनोरञ्जनमा मन गएकाले पढाइमा थोरै बाधाअड्चन आइपरेको समेत देखिन्छ । नोकरी नै तपाईंको जीवनवृत्तिको प्रमुख आधार हो ।

---

नाम : राजेन्द्रप्रसाद रिमाल
जन्मस्थान : चन्द्रौटा, कपिलवस्तु
जन्म मिति : २०५७-७-५
जन्म समय : दिवा ३:२७ बजे

मेरो विद्या, विवाह, भाग्य र वैदेशिक रोजगारीका बारेमा बताइदिनुहुन अनुरोध गर्दछु ।

विद्यामा राम्रो सफलताको योग रहे पनि वर्तमान समयमा चलेको भ्रामरी दशाका कारण अनावश्यक बाधाअड्चन आइपर्ने देखिन्छ । सामान्य चोटपटकको सम्भावना रहेकाले यात्रा एवं सवारी चलाउँदा विशेष सावधानी अपनाउनुपर्ने समय रहेको छ । विवाहका लागि २९ वर्ष उप्रान्त मात्र राम्रो देखिन्छ । दाम्पत्य जीवन रमाइलो तरिकाले बित्ने छ । मनले सोचेका योजना र आँटेताकेका काम पूरा हुनेछन् । स्वदेश अनि विदेश दुवैतर्फ राम्रो सफलता मिल्ने देखिन्छ । शारीरिक आरोग्यता अनुकूल रहने छ । साहित्य सङ्गीत आदि कला क्षेत्रमा लागेमा राम्रो सफलता मिल्ने देखिन्छ । भाग्य राम्रो लिएर आएकाले भविष्य उज्ज्वल देखिन्छ ।

## @)*! ;fn h]7 dlxgfsf] /flzkmn

◆ ज्यो. हरिप्रसाद पौडेल



**मेष** लेनदेनसम्बन्धी आर्थिक कारोबारमा सतर्कता अपनाउनुपर्ने छ। महिनाको प्रारम्भमा सामान्य विवादको स्थिति आउने देखिएकाले बोलीचालीमा विचार पुऱ्याउनुपर्ने छ। उच्च मनोबलका साथ कार्यक्षमतामा समेत उल्लेख्य वृद्धि भएर जाला। साहस र धैर्यले धेरै काम बन्ने छन्। साथीभाइ तथा इष्टमित्रको सरसहयोग मिल्नुका साथै रमाइलो भेटघाटको अवसर मिल्ने छ। मानसिक अस्थिरता एवं दुबिधा केही बढेर जाने छन्। विपरीत लिङ्गीसँगको आकर्षण बढ्नुका साथै प्रेम एवं मनोरञ्जनमा मन भुल्ने छ। सामाजिक एवं धार्मिक काममा अभिरुचि बढेर जाला। मानसिक प्रसन्नता एवं शारीरिक आरोग्यता सन्तुलित रहने छ।

**वृष** सामान्य अस्वस्थताको सम्भावना देखिन्छ। गर्न आँटेका काममा अनायासै नसोचेका समस्या आइपर्ने छन्। शारीरिक परिश्रमका साथै मानसिक तापसमेत बढी नै पर्न जाने छ। सामान्य पेटसम्बन्धी अस्वस्थता उत्पन्न हुने देखिन्छ। सामान्य विवादको सम्भावना देखिएकाले बोलीचालीमा विचार पुऱ्याउनुपर्ला। महिनाको उत्तरार्धमा आर्थिक लाभका साथै मनोरञ्जनका अवसर मिल्ने छन्। पारिवारिक झमेलाका साथै सन्तानको चिन्ताले केही पिरोल्ने देखिन्छ। पठनपाठनमा अनावश्यक बाधाअड्चन आइपर्ने देखिएकाले सफलताका लागि केही बढी नै परिश्रम गर्नुपर्ने समय छ।

**मिथुन** कार्यव्यस्तता बढेर जानाले शारीरिक परिश्रम केही ज्यादा पर्न जाने छ। घरायसी पारिवारिक झमेला आइपर्नुका साथै सन्तानको चिन्ताले समेत सताउने देखिन्छ। सामान्य अस्वस्थताको सम्भावना रहेकाले खानपानमा विचार गर्नुपर्ने देखिन्छ। लेनदेनसम्बन्धी आर्थिक कारोबारका साथै ठूला लगानी नगर्दा राम्रो होला। खराब व्यक्तिको सङ्गतले दुःख पाइने देखिएकाले साथीसङ्गतमा विचार गर्नुपर्ला। पठनपाठनमा सामान्य बाधाअड्चन आइपर्ने छन्। धार्मिक एवं सामाजिक क्षेत्रका काममा अभिरुचि बढेर जाला। महिनाको उत्तरार्धमा धनागम एवं मनोरञ्जनका अवसर मिल्ने छन्।

**कर्कट** उच्च मनोबलका साथ कार्यक्षमतामा समेत उल्लेख्य वृद्धि भएर जाने छ । मनले आँटेका काममा सफलता मिल्ने छ। स्वास्थ्य सबल हुनुका साथै शारीरिक फुर्ती एवं मानसिक जोश जाँगरसमेत बढेर आउने छ । दाजुभाइ तथा इष्टमित्रसँगको सम्बन्धमा केही तिक्तताको अनुभूति गराउला। केही नसोचेका घरायसी झमेला एवं चिन्ता देखा पर्ने छन्। आर्थिक पक्षका काममा राम्रो सफलता प्राप्त होला। सामाजिक कार्यक्रममा सहभागी हुनुपर्ला। महिनाको उत्तरार्धमा गर्न आँटेका काममा सामान्य बाधाअड्चन आइपर्ने छन्। नयाँ आम्दानीका स्रोत फेला पर्ने छन्। रमाइलो ठाउँको भ्रमणका साथै मनोरञ्जनका अवसरसमेत मिल्ने छन्।

**सिंह** उच्च मनोबलका साथ कार्यक्षमतामा उल्लेख्य वृद्धि भएर जाने छ। प्रतिस्पर्धामा महत्त्वपूर्ण सफलता प्राप्त होला। सामाजिक प्रतिष्ठा बढेर जानुका साथै धार्मिक कार्यमा समेत अभिरुचि बढेर जाने छ। महिनाको प्रारम्भमा आँटेको काममा सामान्य बाधाअड्चन आइपरे पनि महिनाको उत्तरार्धमा क्रमशः हटेर जाने छन्। शारीरिक आरोग्यता सबल रहने छ। नोकरीमा पदोन्नतिको सम्भावना छ। अध्ययन अध्यापनमा मध्यम सफलताको योग छ।

**कन्या** कार्यव्यस्तता बढेर जानाले शारीरिक ताप केही बढी नै पर्ने देखिन्छ। लामो समयदेखि रोकिएका काम क्रमशः बन्दै जाने छन्। घरायसी खर्चको मात्रा केही बढेर जाने छ। शारीरिक आरोग्यताका साथ मानसिक प्रसन्नता अनुकूल रहला। मान्छे चिनेर मात्र व्यवहार गर्नुपर्ला । पठनपाठनमा गहिरो अभिरुचि लाग्नुका साथै उच्च सफलताको योग छ। आर्थिक पक्षका काममा राम्रै सफलता प्राप्त हुने छ। रमाइलो यात्रा एवं मनोरञ्जनका अवसरसमेत मिल्ने छन् ।

**तुला** सफलताको महिना छ। उच्च मनोबलका साथ कार्यक्षमतामा बढोत्तरी भएर जाने छ। काममा आएका बाधाअड्चन क्रमशः हटेर जाने छन्। स्वास्थ्यमा क्रमशः सुधारको योग छ। पारिवारिक मेलमिलाप तथा समझदारीको सम्भावना कमै देखिन्छ। सानातिना कुरामा परिवारमा मतभिन्नता आउने देखिन्छ। आकस्मिक यात्राका साथै पारिवारिक भेटघाटको सम्भावना छ। महिनाको पूर्वार्धमा आइपरेका समस्याको समाधान उत्तरार्धतिर गएर निस्कने देखिन्छ। सामाजिक मानसम्मानका साथै रमाइलो भेटघाटको अवसरसमेत मिल्ने छ ।

**वृश्चिक** मानसिक प्रसन्नताका साथै शारीरिक आरोग्यता अनुकूल रहला । कार्यव्यस्तता बढेर जानाले बेफुर्सदी जस्तो गराउने छ । आकस्मिक यात्राका साथै स्थान परिवर्तनको सम्भावना छ । अनावश्यक काममा दौडधुप केही बढी नै गर्नुपर्ला । घरायसी खर्चको मात्रा बढेर जानाले आर्थिक अभावको स्थिति देखा पर्ने छ । पठनपाठनमा अभिरुचि बढेर जाने छ । दाम्पत्य सम्बन्धमा मधुरताको आभास होला । व्यापारिक वर्गका लागि समय राम्रो छ । महिनाको अन्त्यतिर पारिवारिक घेटघाट एवं मनोरञ्जनका अवसर मिल्ने छन् ।

**धनु** महिनाका ग्रहगोचर सामान्य रहेका छन् । सोचेका योजनामा क्रमशः सफलता मिल्दै जाने छ । शारीरिक आरोग्यताका साथै मानसिक प्रसन्नता अनुकूल रहने छ । प्रतिस्पर्धामा सफलताको योग छ । आर्थिक पक्ष सबल रहने छ । सामान्य विवादको सम्भावना रहेकाले बोलीचालीमा विचार पुऱ्याउनुपर्ने देखिन्छ । दाम्पत्य सम्बन्धमा सामान्य खटपटको स्थिति आइपर्ने देखिन्छ । पठनपाठनमा सामान्य बाधाअड्चन आइपर्ने छन् । प्रतिस्पर्धामा सफलताको सम्भावना रहेको छ । युवाहरूको लागि प्रेम तथा मनोरञ्जनका अवसर मिल्ने छन् ।

**मकर** शारीरिक परिश्रमका साथै मानसिक तापसमेत केही बढी पर्ने देखिन्छ । गर्न आँटेका काम तथा मनले सोचेका योजनामा ढिलासुस्ती गराउने देखिन्छ । परोक्षमा कुरा काट्ने तथा रिस गर्ने धेरै देखिएलान् । सामान्य शारीरिक अस्वस्थताको सम्भावना रहेको छ । सन्तान तथा परिवारको चिन्ताले केही बढी नै सताउने छ । घरायसी विषयलाई लिएर परिवारमा सामान्य असमझदारी आउने देखिन्छ । महिनाको उत्तरार्धमा काममा प्रगति, धनागमका साथै मनोरञ्जनका अवसर मिल्ने छन् । रमाइलो यात्राका साथै मनोरञ्जनका अवसरसमेत मिल्ने छ ।

**कुम्भ** मानसिक अस्थिरता एवं दुबिधा केही बढेर जाने छ । सामान्य अस्वस्थताको सम्भावना रहेको छ । काममा आइपरेका विघ्नबाधा क्रमशः हटेर जाने छन् । पठनपाठनमा गहिरो अभिरुचि लाग्नुका साथै प्रतिस्पर्धामा महत्त्वपूर्ण सफलता हात पर्ने छ । युवकयुवतीका लागि मनोरञ्जन एवं रमाइलो भ्रमणको अवसर मिल्ने छ । महिनाको उत्तरार्धमा आर्थिक क्षेत्रका काममा राम्रै सफलता मिल्ने छ । रमाइलो पारिवारिक वातावरणका साथै मनोरञ्जनका अवसर मिल्ने छन् ।

**मीन** शरीरमा नयाँ जोश र जाँगर बढेर जाने छ । उच्च मनोबलका साथ कार्यक्षमतामा समेत उल्लेख्य वृद्धि भएर जाने छ । सामाजिक काममा मानसम्मानको सम्भावना रहेको छ । शारीरिक आरोग्यता अनुकूल रहने छ । दम्पतीमा घरायसी विषयलाई लिएर सामान्य असमझदारी बढ्ने देखिन्छ । आफन्तको भेटघाटले पारिवारिक वातावरण रमाइलो बन्ने छ । साथीभाइसँग रमाइलो भ्रमणका साथै मनोरञ्जनका अवसर मिल्ने छन् । आर्थिक क्षेत्रका काममा राम्रै सफलता मिल्ने छ । पठनपाठनमा मध्यम सफलताको योग छ ।

**उत्तर**

१. ११ जना (१० यात्रु र एक जना तपाईं)
२. Liar

## तपाईंको प्रश्न, हाम्रा ज्योतिषी

नाम : ..........

जन्म स्थान : .......... जन्म मिति : ..........

जन्म बार : ..........

जन्म समय : .......... ठेगाना : ..........

प्रश्न : ..........

जन्म समय अनिवार्य छ ।

आफ्नो भविष्यबारे जिज्ञासा राख्नुहुने पाठकले कुपन भरी हरेक महिनाको १५ गतेभित्र युवामञ्चमा आइपुग्ने गरी पठाउनुहोला वा इमेल गर्नुहोला । तपाईंको जिज्ञासाको जवाफ ज्योतिषाचार्य हरिप्रसाद पौडेलले दिनुहुने छ ।

# सामान्यज्ञान प्रतियोगिता जेठ २०८१

एक समूहमा तीन प्रश्न रहने गरी सात समूहमा प्रश्न सोधिएको छ । यस प्रकार कुल २१ प्रश्न यस प्रतियोगितामा समावेश गरिएको छ । प्रतियोगितामा समावेश प्रत्येक समूहको अङ्क भार फरक छ । सम्बन्धित अङ्क भार समूहको अगाडि उल्लेख गरिएको छ तर कुनै पनि समूहमा समावेश गरिएका प्रश्नको सही उत्तरमा दिइने अङ्क भने फरक–फरक छ । उदाहरणका लागि पहिलो समूहको अङ्क भार ६ हो र त्यसमा तीन प्रश्न समावेश छन । ती तिनै प्रश्नको उत्तरमा पाइने अङ्क फरक हुनेछ तर समूहको कुल अङ्क भारभन्दा बढी चाहिँ हुनेछैन । जस्तो समूह क मा समावेश तीन प्रश्नमा पहिलो, दोस्रो र तेस्रो प्रश्नको उत्तरमा पाइने अङ्क ३, १ वा २ हुनसक्छ ।

एवं प्रकारले सबै समूहको उत्तर दिनुपर्नेछ । सही उत्तरमा अङ्क प्राप्त हुनेछ । यस प्रकारले अङ्कका आधारमा प्रथम, द्वितीय र तृतीय हुनेलाई क्रमशः रु. १५००/–, १०००/– र ५००/– पुरस्कार दिइनेछ । अङ्क बराबर भएमा गोलाप्रथाद्वारा निर्णय लिइनेछ ।

अधिकतम अङ्क ल्याउने १० जनाको नामावली प्रकाशित गरिनेछ ।

## प्रश्न

**समूह (क), कुल अङ्क भार– ६**

१. पाँचौं अन्तर्राष्ट्रिय सांस्कृतिक चलचित्र महोत्सवमा उत्कृष्ट फिल्मको अवार्ड कुन चलचित्रले जित्यो ? [१]

२) सेभिङ एसियाज् भल्चर्स क्रम एक्स्टिन्सन (सेभ) ले गिद्धका लागि विश्वकै पहिलो सुरक्षित क्षेत्रका रूपमा घोषणा गरेको देश कुन हो ? [३]

३) अन्तर्राष्ट्रिय युवा वैज्ञानिक पुरस्कार–२०२३ प्राप्त गर्ने नेपाली को हुन् ? [२]

**समूह (ख), कुल अङ्क भार– ८**

१) हाल कार्बनडाइअक्साइड उत्सर्जन गर्ने विश्वको पहिलो मुलुक कुन हो ? [३]

२) आफ्ना विश्व कीर्तिमानको सङ्ख्या १५६ पुऱ्याउन सफल कीर्तिमानी नेपाली हो हुन् ? [३]

३) पाकिस्तानका राष्ट्रपिता भनेर कसलाई चिनिन्छ ? [२]

**समूह (ग), कुल अङ्क भार– १२**

१) मातृभाषा राष्ट्रिय सेवा पुरस्कार–२००० कसलाई प्रदान गरियो ? [५]

२) सुनथराली विमानस्थल कहाँ रहेको छ ? [३]

३) प्रेसिडेन्ट लाइफटाइम अचिभमेन्ट अवार्डबाट सम्मानित (अमेरिकामा) नेपाली मूलका युवा को हुन् ? [४]

**समूह (घ), कुल अङ्क भार–त १४**

१) १३ औं नेपाल–युरोपियन युनियन चलचित्र महोत्सव–२०८० मा उत्कृष्ट चलचित्रको अवार्ड कुन वृत्तचित्रलाई प्रदान गरियो ? [७]

२) नेपाल संस्कृत विश्वविद्यालयबाट संस्कृतमा विद्यावारिधि गर्ने पहिलो मुस्लिम महिला को हुन् ? [३]

३) उच्च स्थानमा रहेको तिलिचो तालमा गीत रेकर्ड गरेर गिनिज बुक अफ वर्ल्ड रेकर्डमा नाम लेखाउन सफल गायक को हुन् ? [४]

**समूह (ङ), कुल अङ्क भार– १८**

१) बिबिसीको १०० शक्तिशाली महिलाको सूचीमा पर्ने नेपाली अभियन्ता को हुन् ? [६]

२) नेपालसँग कूटनीतिक सम्बन्ध कायम भएको १८२ औं राष्ट्र कुन हो ? [६]

३) फ्रिडम इन एक्साइल नामक कृतिका लेखक को हुन् ? [६]

**समूह (च), कुल अङ्क भार– २०**

१) जात्रा र पर्वको शहर भनेर कुन सहरलाई चिनिन्छ ? [६]

२) प्राकृतिक ग्यास, खनिज तेल, कोइला आदि कस्तो प्रकारको ऊर्जाका स्रोत हुन् ? [६]

३) स्पाइनी ब्याब्लर भनेर कुन चरालाई चिनिन्छ ? [८]

**समूह (छ), कुल अङ्क भार २२**

१) संसारकै पुरानो जङ्गल कहाँ फेला परेको छ ? [८]

२) सर्वप्रथम बजेटको सुरुवात कुन देशबाट भएको हो ? [६]

३) सर्वप्रथम सुशासन शब्दको प्रयोग कसले गरेको हो ? [८]

चैत अङ्कको परिणाम पृष्ठ ७४ मा



उत्तर २०८१ असार १५ गतेसम्म प्राप्त भइसक्नु पर्नेछ ।

**२०८१ साल जेठको सामान्यज्ञान**

**समूह (क), कुल अङ्क भार– ६**

१) ............................................. [१]
२) ............................................. [३]
३) ............................................. [२]

**समूह (ख), कुल अङ्क भार– ८**

१)............................................. [३]
२) ............................................. [३]
३) ............................................. [२]

**समूह (ग), कुल अङ्क भार– १२**

१) ............................................. [५]
२) ............................................. [३]
३) ............................................. [४]

**समूह (घ), कुल अङ्क भार– १४**

१) ............................................. [७]
२) ............................................. [३]
३) ............................................. [४]

**समूह (ङ), कुल अङ्क भार– १८**

१) ............................................. [६]
२) ............................................. [६]
३) ............................................. [६]

**समूह (च), कुल अङ्क भार– २०**

१) ............................................. [६]
२) ............................................. [६]
३) ............................................. [८]

**समूह (छ), कुल अङ्क भार २२**

१) ............................................. [८]
२) ............................................. [६]
३) ............................................. [८]

नाम : .............................................................

ठेगाना : .........................................................

# २०८० चैत १ देखि ३० गतेसम्मका राष्ट्रिय घटना

चैत १ गते : सुनको अवैध तस्करीबारे जाँचबुझ गर्न गठित आयोगद्वारा ६८ जनालाई कारबाहीको सिफारिस ।

– उदयपुरको बेलका नपा–७ स्थित मैनामैनीको चुहार क्षेत्रमा जिप दुर्घटना हुँदा आठ जनाको मृत्यु, नौ जना घाइते ।

चैत २ गते : सुन तस्करी प्रकरणको जाँचबुझ गर्न गठन भएको आयोगले पेस गरेको प्रतिवेदन कार्यान्वयन गर्ने सरकारको निणर्यसँगै प्रहरीद्वारा पूर्वउपराष्ट्रपति नन्दबहादुर पुनका छोरा दिपेश पुन पक्राउ ।

चैत ५ गते : प्रतिनिधि सभाका पूर्वसभामुख तथा सत्तारूढ नेपाल कम्युनिस्ट पार्टी (माओवादी केन्द्र) का उपाध्यक्ष कृष्णबहादुर महरालाई चार दिन हिरासतमा राखेर अनुसन्धान गर्न अदालतद्वारा अनुमति ।

– बागलुङको निसीखोलास्थित जाउलेपानीमा बस दुर्घटना हुँदा सात जनाको घटनास्थलमै मृत्यु, २५ घाइते ।

चैत ८ गते : अख्तियार दुरुपयोग अनुसन्धान आयोगले उपत्यका विकास प्राधिकरणमा करारमा कार्यरत शाखा अधिकृत यामकुमार कार्कीविरुद्ध तीन करोड २१ लाख ३२ हजार रुपियाँ बिगो दाबी गर्दै भ्रष्टाचार मुद्दा दायर ।

– नेपाल प्रहरीको केन्द्रीय अनुसन्धान ब्युरो (सिआइबी)ले जिल्ला सरकारी वकिलको रोहवरमा व्यवसायी तथा प्रतिनिधि सभा सदस्य विनोद चौधरीसँग बयान लियो ।

चैत ९ गते : सरकारद्वारा तत्कालीन बाँसबारी छालाजुत्ता कारखाना लिमिटेडबाट व्यक्तिका नाममा पुगेको १० रोपनी जग्गा सरकारका नाममा फिर्ता ल्याउने निर्णय ।

– अवैध सुन तस्करी प्रकरणमा पक्राउ परेका प्रतिनिधि सभाका पूर्वसभामुख तथा नेपाल कम्युनिस्ट पार्टी (माओवादी केन्द्र) का उपाध्यक्ष कृष्णबहादुर महरा हाजिरी जमानतमा रिहा ।

चैत १२ गते : राष्ट्रपति रामचन्द्र पौडेलद्वारा दीपक कार्कीलाई प्रधानमन्त्रीको सिफारिसमा वन तथा वातावरण राज्यमन्त्रीमा नियुक्त ।

चैत १३ गते : विशेष अदालतद्वारा सम्पत्ति शुद्धीकरण मुद्दामा सपना मल्ल, सञ्जीव अर्याल, दीपक केसी र सरदार अहमद खाँलाई जनही आठ वर्ष कैद सजायको फैसला ।

चैत १५ गते : नेपाल दूर सञ्चार प्राधिकरणले खरिद गरेको मोबाइल डिभाइस म्यानेजमेन्ट सिस्टम (एमडिएमएस) परामर्श खरिद कार्यमा अनियमितता गरेको आरोपमा प्राधिकरणका दुई पूर्वअध्यक्षसहित १९ जना र दुईवटा कम्पनीविरुद्ध भ्रष्टाचार मुद्दा दायर ।

– राष्ट्रिय सभा उपाध्यक्ष उर्मिला अर्यालद्वारा पदबाट राजीनामा ।

चैत १६ गते : सर्वोच्च अदालतद्वारा नेपाली कांग्रेसका सांसद टेकबहादुर गुरुङको निलम्बन फुकुवा आदेश ।

चैत १८ गते : राजस्व अनुसन्धान विभागद्वारा कोटिभिटी नेपाल प्राइभेट लिमिटेडविरुद्ध १० अर्ब ३६ करोड रुपियाँभन्दा बढी राजस्व चुहावट गरेको अभियोगमा मुद्दा दायर ।

– विशेष अदालतले भ्रष्टाचार अनुसन्धानका सिलसिलामा हिरासतमा रहेका नेपाल टेलिकमका पूर्वप्रबन्ध निर्देशक सुनील पौडेल र सुरक्षण मुद्रण कोषका कार्यकारी निर्देशक विकल पौडेललाई थप २१ दिन थुनामा राख्न अनुमति ।

चैत १९ गते : बागमती प्रदेशका मुख्यमन्त्री शालिकराम जम्कट्टेललाई बागमती प्रदेश सभाबाट तेस्रो पटक विश्वासको मत प्राप्त ।

चैत २२ गते : नेपाल वायु सेवा निगमको विमान खरिद गर्दा आर्थिक अनियमितता गरेको आरोपमा अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा तत्कालीन मन्त्रीसहित ३२ जनाविरुद्ध भ्रष्टाचार मुद्दा दायर ।

चैत २३ गते : लुम्बिनी प्रदेश प्रमुख अमिक शेरचनद्वारा नेकपा (माओवादी केन्द्र) लुम्बिनी प्रदेश संसदीय दलका नेता जोखबहादुर महरालाई लुम्बिनी प्रदेशको मुख्यमन्त्री नियुक्त ।

चैत २५ गते : गण्डकी प्रदेशको मुख्यमन्त्रीमा खगराज अधिकारी नियुक्त ।

चैत २७ गते : कर्णाली प्रदेशको मुख्यमन्त्रीमा नेकपा (एमाले) प्रदेश संसदीय दलका नेता यामलाल कँडेल नियुक्त ।

चैत २८ गते : राष्ट्रिय सभाको उपाध्यक्ष पदमा विमला घिमिरे निर्वाचित ।

चैत ३० गते : गोरखापत्र दैनिकमा प्रकाशन हुँदै आइरहेको नयाँ नेपाल बहुभाषा पृष्ठमा थप दुई मातृभाषा समावेश गरी ४३ मातृभाषा प्रकाशन गर्ने निर्णय । ■

*– सरस्वती खत्री, क्षेत्री*